# काठमाडौं मजिपाटका रञ्जितकार (छिपा) हरूको सामाजिक तथा सांस्कृतिक अध्ययन

त्रिभुवन विश्वविद्यालय, मानविकी तथा सामाजिक शास्त्र सङ्कायअन्तर्गत
नेपाली इतिहास, संस्कृति तथा पुरातत्व विषयको स्नातकोत्तर तह
उपाधिको आंशिक परिपूर्तिका लागि प्रस्तुत



## शोधपत्र




**शोधार्थी**

**प्रतिमा रञ्जित**

स्नातकोत्तर द्वितीय वर्ष

त्रि.वि.कीर्तिपुर


२०६७

## मन्तव्य

प्रस्तुत शोधलाई पूर्णता दिन विभिन्न ठाउँबाट विभिन्न किसिमको सहयोग प्राप्त भएको छ । सर्वप्रथम यस विषयमा विभिन्न सहयोग, सुझाव र निर्देशन गर्नुहुने गुरू सह प्रा.डा.डिल्ली ओलीप्रति आभार व्यक्त गर्दछु । त्यसैगरि विभिन्न किसिमको सुझाव, सहयोग र प्रेरणा दिनुहुने विभागीय प्रमुख मेडम प्रा.डा.वीणा पौड्यालज्यूप्रति पनि आभार व्यक्त गर्दछु । यस अध्ययनका क्रममा महत्वपूर्ण श्रोत, सामग्री र सूचना दिने तथा जानकारी प्रदान गर्नुहुने रञ्जितकार समुदायका विभिन्न व्यक्तित्वहरू हुनुहुन्छ । उहाँहरूको सूचि धेरै लामो छ । उहाँहरूमध्ये बयोबृद्ध भाइबा (भाइकाजी) रञ्जितकार, ई.पुष्परत्न रञ्जितकार, ई. त्रैलोक्यमान रञ्जितकार, सभासद ध्यानगोविन्द रञ्जितकार, गोविन्दप्रसाद रञ्जितकार, साहित्यकार हरिशंकर रञ्जितकार, डा. मुकुन्द रञ्जितकार, प्रा.भाईराजा रञ्जितकार, कृष्णराम रञ्जितकार, डा. केदारप्रसाद रञ्जितकार, प्रा.डा.नन्दगोपाल रञ्जितकार, वीणा रञ्जितकार, शालिग्राम नेपाल लगायत रञ्जितकार समाज मुख्य रूपमा रहनुभएको छ । जसको सूचना, जानकारी र सहयोगबाट प्रस्तुत शोधले पूर्णता पाउन सकेको हो । यी बाहेक अन्य विभिन्न व्यक्तिहरूबाट सहयोग प्राप्त भएको छ । उहाँहरू सबैप्रति आदरभाव साथ कृतज्ञता ज्ञापन गर्दछु ।

साथै उपयुक्त पारिवारिक वातावरण सृजना गरी सहयोग गर्नु हुने श्रीमान कुमारबहादुर रञ्जितकार, सासुआमा नजरकुमार रञ्जितकार, छोरा दीक्षान्त कुमार रञ्जितकार दिदी शुभलक्ष्मी रञ्जितकार, भान्जा जेनुस रञ्जितकार, भान्जी नितिज यादव लगायत सम्पूर्ण आफन्तहरूमा धन्यवाद दिनुका दिनुका साथै रञ्जितकार जातिको विषयमा अध्ययन गर्न प्रेरणा एवं हौसला प्रदान गर्नु हुने रञ्जितकार समाजका महासचिव श्री कुमारबहादुर रञ्जितकारलाई विशेष धन्यवाद दिन चाहन्छु । अन्त्यमा छोटो समयमा छपाई सम्बन्धी सम्पूर्ण काम गरी दिनु हुने किरण कार्कीज्यूप्रति पनि हार्दिक धन्यवाद व्यक्त गर्दछु ।

**प्रतिमा रञ्जित**
स्नातकोत्तर तह दोस्रो वर्ष
नेपाली इतिहास, संस्कृति तथा पुरातत्व
केन्द्रीय विभाग
कीर्तिपुर, काठमाडौं

# विषयसूची

## पहिलो परिच्छेद
## परिचय



## दोस्रो अध्याय
## रञ्जितकारहरूको परिचय, नेवार समुदायको परिचय र जाति विभाजन



## तेस्रो अध्याय

## चौथो अध्याय

## संस्कृति



## पाँचौ अध्याय

# पहिलो अध्याय
# परिचय

नेपाल भौगोलिक विविधताको साथै जातीय विविधता पनि भएको देश हो । यहाँ आर्य, मंगोलियन, द्रविड भनिने मूल जातिका विभिन्न स्वरूप, संरचना छन् । नेपालमा यी अन्तरगत विभिन्न जाति, जातिय समूह र जनजातिका मानिसहरू बसोबास गर्दछन् । नेपाल प्राचीन वर्ण व्यवस्थाको मान्यताअनुसारका चार वर्णअन्तर्गत यी विभिन्न समूहहरूलाई राखिएको पाइन्छ । यहाँ आदिवासी भनिने एउटा ठूलो समूह छ जसले आफूलाई मंगोलियन मूलका र गैरहिन्दू भन्दछन् । त्यसै गरी ब्राम्हण, क्षेत्री र व्यावसायीक समूहका मानिसहरू आफूलाई आर्य समूहअन्तर्गत राख्दछन् । यिनै परिप्रेक्ष्यमा नेपाल उपत्यकाका आदिवासीको रूपमा नेवार समुदायलाई लिइन्छ, जसले यहाँ सभ्यता र संस्कृतिको निर्माण गरे । मानवशास्त्रीहरू नेवारलाई एउटा जाति नभएर जातिय समूहको साझा नामको रूपमा लिन्छन् । प्राचीन कालदेखि नेपाल मण्डल विभिन्न जाति, पेशा र समूहहरूको आकषर्णको केन्द्र भएकोले इतिहासका विभिन्न चरण र कालखण्डहरूमा विभिन्न जाति, समूहहरूको आवागमन भइरह्यो । यसबाट प्राचीन नेवार जाति पनि प्रभावित हुनपुग्यो । त्यसैले नेपाल मण्डलमा बसोबास गर्ने नेवारलाई विभिन्न जाति, पेश र वर्गको समन्वयको जातिको रूपमा लिने गरिएको पाइन्छ । नेवार समुदायमा विभिन्न वर्ग, जाति, पेशा र परम्पराका विभिन्न समूह छन् । सम्भवतः रञ्जितकार पनि नेवार जातिभित्रको यस्तै एउटा समूह हो । जसलाई व्यवसायको आधारबाट चिन्न सकिन्छ ।

छिपाबाट रञ्जितकार भनि लेख्ने गरेको कुनै आधार र प्रमाण देखिदैन । यिनीहरू (रञ्जितकार) का अनुसार जयस्थिति मल्लले जाति विभाजनमा छिपाहरूलाई रञ्जितकार भनी नामाकरण गरेपछि सोही अनुसार लेख्न थालेको भनाइ रहेको छ ।

हाल रञ्जितकार जातिका मानिसहरू कसैले पनि “छिपा” भनी लेख्ने गरेको पाइँदैन तर मजिपाट टोल निवासी स्व.अमृतबहादुर रञ्जितकारले मात्र पहिलादेखि नै आफ्नो जातीय पहिचानको लागि आफ्नो नाम पछाडि “छिपा” लेख्ने गरेको पाइयो ।

नेपाल शिक्षा वर्ष ५, अंक १, २०१०/६/१२ मा प्रकाशित “वर्तमान शिक्षाको चर्चा” लेखमा लेखकले (अमृतबहादुर “छिपा”) भनी उल्लेख गरेको देखिन्छ । त्यसै गरी नेपाल शिक्षा वर्षकै वर्ष ५, अंक ३ २०११/१/३ मा प्रकाशित “देश निर्माणको बाटो नै शिक्षा हो” भन्ने लेखमा पनि “छिपा” भनी उल्लेख भएको पाइन्छ ।

## १.१ समस्या कथन

मुख्य वस्तीका रूपमा बसोबास गर्दै आइरहेका नेवार समुदायभित्रको एक जाती अर्थात् रञ्जितकारहरू पनि एक जाती हुन् । रञ्जितकारहरूको उपत्यका लगायत उपत्यका बाहिर पनि बसोबास रहेको पाइन्छ । यिनीहरूको परम्परागत पेशा विभिन्न प्रकारका जडिबुटीबाट थरिथरिका रंग बनाई सेतो कपडा वा धागोलाई रंगाउनु हो । कपडामा रंग रंगाउने र विभिन्न हस्तनिर्मित काठका बुट्टाहरूबाट कपडामा बुट्टा छाप्नु पनि यिनीहरूको मुख्य परम्परागत काम मानिन्छ । रञ्जितकार शब्दले कपडा रंगाउने जातीका रूपमा परिचित यस जातिको उक्त पेशा हाल लोपोन्मुख पेशाका रूपमा परिणत भएको देखिन्छ ।

विदेशी विद्वान लेखक कोलिन रोसरले २०५८ सालको जनगणनाको आधारमा नेवारहरूको जनसंख्याका बारेमा आफ्नो पुस्तक Social Mobility in Newar Caste System मा रञ्जितकारहरूको जनसंख्या १.२ प्रतिशत अर्थात् १४,९४३ रहेको उल्लेख गरिएको देखिन्छ ।

न्यून जनसंख्या रहेको यस जातिको परम्परागत पेशाकै आधारमा समाजमा यिनीहरूको सबै वर्गसँग राम्रो सम्बन्ध रहेको देखिन्छ । यिनीहरूले नै तत्कालीन राजा महाराजाहरूका पोशाक, श्रीपेच, भौतिक सामानहरूमा रंग रंगाउने र बुट्टा भर्ने काम गर्दै आइरहेको पाइन्छ । नेवार समुदायभित्र यिनीहरू वौद्ध धर्मावलम्वीहरू मानिन्छ । यिनीहरूको मूल पेशा रंगाउनु र बुट्टा भर्नु भए पनि समयको परिवर्तन सँगसँगै रोजगारीका हिसावले अन्य पेशा र व्यवसायमा रूपान्तर हुँदै गइरहेका देखिन्छ । हाल विदेशी उत्पादनका कारण र भारतीय श्रमिकहरूका कारण यस समुदायको जातीय पेशामा नकारात्मक असरले गर्दा आफ्नो पेशामा परिवर्तन ल्याउनु यिनीहरूको सामाजिक यथार्थ हो ।

समग्र शोध सङ्गठन र विषयका दृष्टिले निम्न प्रश्नहरूको उत्तर खोज्ने र विश्लेषण गर्ने प्रयास गरिएको छ ।

(क) नेवार समुदायभित्र रञ्जितकारहरूको उपस्थितिको स्थिति कस्तो छ ?

(ख) रञ्जितकारहरूको जातिय व्यवसायको वर्तमान स्वरूप र स्थिति कस्तो छ ?

(ग) रञ्जितकारहरूको परम्परागत व्यवसाय बाहेक अन्य व्यवसायको स्थिति कस्तो छ ?

(घ) रञ्जितकारहरूको सामाजिक जीवन पद्धति र परम्परागत व्यवसाय बीचको अन्तरसम्बन्ध कस्तो छ ? र

(ङ) रञ्जितकार र अन्य नेवार समुदायबीच विशिष्ट भिन्नताहरू कस्ता छन् ? आदि ।

## १.२ अध्ययनको उद्देश्य

माथि प्रस्तुत समस्याका सन्दर्भमा यस अध्ययनका उद्देश्य निम्नानुसार छन् :

(क) रञ्जितकारहरूको पारिवारिक स्थिति प्रस्तुत गर्नु,

(ख) रञ्जितकारहरूको सामाजिक जीवनको रूपरेखा प्रस्तुत गर्नु,

(ग) रञ्जितकारहरूको सामाजिक मान्यताहरूको बारेमा उल्लेख गर्नु,

(घ) नेवार समाजभित्र रञ्जितकारहरूको उपस्थितिबारे चर्चा गर्नु,

(ङ) रञ्जितकारहरूको जातिय व्यवसाय र त्यसको वर्तमान स्वरूपबारे चर्चा गर्नु ।

## १.३ शोध विधि

काठमाडौं उपत्यकामा बसोबास गर्ने रञ्जितकारहरूको बारे अध्ययन गर्दा विशेष शोध विधि अपनाउनु आवश्यक देखिएको छ । यो अध्ययन मूलतः स्थलगत अध्ययनमा आधारित छ ।

### १.३.१ अध्ययन क्षेत्रको छनोट

यस अध्ययनमा का.म.न.पा.को वडा नं. २१ को मजिपाट मञ्जुश्री क्षेत्रलाई अध्ययन क्षेत्र तोकिएको छ । यहाँ २२ घरपरिवार रहेका छन् भने उनीहरूको जनसङ्ख्या २३५ जना रहेको छ ।

### १.३.२ तथ्याङ्क सङ्कलन विधि

प्रस्तुत शोधका लागि अवलोकन, अन्तरवार्ता, विशेष अन्तरवार्ता, पूर्व प्रकाशित सामाग्रीलाई आधार बनाइएको छ । साथै शोधकर्ता स्वयम् रञ्जितकार समूहको व्यक्ति भएकोले अनुसन्धानमा सहजता र प्रमाणितकता रहने कुरामा विश्वास गर्न सकिन्छ । यो अध्ययन पूर्णतया स्थलगत अध्ययनमा आधारित छ । यस अध्ययनका लागि २२ जनासँग प्रत्यक्ष अन्तरवार्ता लिइएको छ ।

## १.४ अध्ययनको सीमा

प्रस्तुत अध्ययनको विषय काठमाडौं- २१ मा बसोबास गर्ने रञ्जितकारहरूको सामाजिक जीवनमा केन्द्रित भएकोले सामाजिक जीवनका विविध विषयहरू, सामाजिक बनोट, थर, गोत्र, परिवार, कार्यप्रणाली, बसोबासको प्रकृति, जीवनयापनका श्रोतहरू, परम्परागत सीप, पेशा, संस्कार, विवाह, नातागोता, रहनसहन, नेवार समुदायसँगको तादात्म्यता आदिमा केन्द्रित रहेको छ ।

## १.५ अध्ययनको महत्व

विशेषरूपमा रञ्जितकारहरूको बारेमा छुट्टै अध्ययन नभएकोले यो अध्ययनले महत्व राख्ने कुरामा विश्वास गर्न सकिन्छ । यस अतिरिक्त यो अध्ययनको महत्व निम्न कुरामा केन्द्रित छ-

(क) रञ्जितकारहरू बारेको पहिलो अध्ययन ।

(ख) रञ्जितकारहरूको सामामाजिक, सांस्कृतिक जीवनका विविध पक्षबारे जानकारी हुनेछ ।

(ग) रञ्जितकारहरूको परम्परागत पेशाको बारेमा जानकारी हुनेछ । र,

(घ) रञ्जितकारहरूको परम्परागत पेशाको वर्तमान स्थितिबारे जानकारी हुनेछ ।

## १.६ पूर्व साहित्य समीक्षा

नेपालका विभिन्न जातजाति र तिनका धर्म, संस्कृति र परम्पराका बारेमा देशी तथा विदेशी विद्वान, अनुसन्धानकर्ताहरूले विभिन्न समयमा अध्ययन, अनुसन्धान गरी अध्ययन, अनुसन्धानको आधारमा आफ्नो लेख, रचना, पुस्तक, पत्रिका आदि प्रकाशनहरू गरेका छन् । छिपा रञ्जितकारहरूका बारेमा त्यस प्रकारको गहन अध्ययन, अनुसन्धान गरी पुस्तक, पत्रिका प्रकाति गरिएको देखिँदैन । केही विद्वान लेखकहरूले प्रकाशित गरेका पुस्तकहरूमा रञ्जितकारहरूका बारेमा सामान्य जानकारी मात्र दिइएको पाइन्छ । यस अध्ययनको सिलसिलामा सीमित लेखकहरूका पुस्तकहरूमा लेखिएका छिपा रञ्जितकार भनेको नेवार जाति मध्येको एक जाति हो भनी उल्लेख गरेको पाइन्छ । उनीहरूको पृथक पहिचान कहीँ पनि खुलाइएको छैन । अध्ययनको विषय 'छिपा' रञ्जितकारहरूको इतिहास तथा सांस्कृतिक सम्पदाको महत्व भए तापनि यिनीहरूको समुचित विकास र अध्ययन, अनुसन्धानको कमी रहेको देखिन्छ । यस विषयको अध्ययनबाट भविष्यमा यी जातिको बारेमा थप अध्ययन, अनुसन्धानमा मद्दत पुग्ने देखिन्छ । यस अध्ययनमा सीमित क्षेत्र र वर्गसँग संलग्न भई अध्ययन गरिने भएकाले यसबाट पूर्ण जानकारीको कमी हुनसक्ने अनुमान गरिएको छ । यस शोध अध्ययनका सिलसिलामा उपलब्ध केही विशेषज्ञ, बुद्धिजीवीहरूको कृतिहरूको यहाँ समीक्षा गरिएको छ ।

- भाइराजा रञ्जित, (२०६०) मा रञ्जितकार समाजबारे तयार पारिएको विशेष बुलेटिन अनुसार रञ्जितकारहरू नेवार समुदाय मध्येका तान्त्रिक बज्रयानी धर्मावलम्बीहरू हुन् र यिनीहरू आफ्नो सम्पूर्ण सामाजिक क्रिया, कर्म, धार्मिक परम्परा बज्रयानी धर्म गुरूमार्फत गराउने चलनबारे उल्लेख गरिएको छ ।
- भिक्षु बुद्धदासले आफ्नो बालोपयोगी सचित्र बुद्ध जीवनीमा यी जातिका बारेमा विशेष उल्लेख गरेका छन् । जसमा २५२६ वर्ष अघिदेखि उपत्यकामा रङ्गको काम गर्ने मानिसहरू बसोबास गरिआएको र यिनीहरू नै पछि (छिपा) अर्थात् रञ्जितकार हुन गएको उल्लेख गरिएको पाईन्छ ।

- डा.डिल्लीरमण रेग्मीको मेडिभल नेपाल, १९६५ पुस्तक अनुसार रञ्जितकारहरू उपत्यकाको आदिवासी नेवार समुदायका हुन् र यिनीहरूको मुख्य कार्य कपडामा रङ्ग लगाउने हो । कपडामा रङ्ग लगाउने जातिकै रूपमा परिचित यिनीहरू कृषि पेशा र छाता बनाउने काम समेत गर्ने गर्दछन् भनी उल्लेख गरिएको छ ।
- डोरबहादुर विष्टको पिपुल अफ नेपाल (१९९७) र सबै जातको फूलवारी २०२९ मा रञ्जितकारहरूको इतिहासका बारेमा उल्लेख नगरे तापनि यिनीहरू नेवार समुदायमा रङ्गको काम गर्ने वर्ग हुन् र यिनीहरू बौद्धधर्म मान्ने जातिहरू हुन् भनी उल्लेख गरिएको छ ।
- गोपाल सिंह नेपालीको द नेवार, (१९६५) भन्ने पुस्तकमा नेवार जातिको बारेमा अध्ययन गरेको छ । नेपालीको सो पुस्तकमा रञ्जितकारहरूका बारेमा पनि सामान्य जानकारी दिइएको छ । कपडालाई विभिन्न रङ्गमा रंगाउने काममा निपुर्ण जातिका रूपमा रञ्जितकार जातिलाई उल्लेख गर्नुभएको देखिन्छ ।
- लेखक जनकलाल शर्माले आफ्नो हाम्रो समाज एक अध्ययन, (२०२९) मा रञ्जितकारहरूको बारेमा उल्लेख गरेका छन् । पुस्तकमा लेखकले नेवार समुदायमा रङ्गको काम गर्ने वर्गहरू नै रञ्जितकारहरू हुन् भनी उल्लेख गरेका छन् ।

यिनका अतिरिक्त अन्य अनुसन्धानकर्ता र लेखकहरू कर्क पेटिक (एन एकाउन्ट अफ दि किङडम अफ नेपाल) डेनियल राईट (हिस्टोरी अफ नेपाल ट्रान्सलेटेड फ्रम पर्वतीया) सिल्वां लेभी (ले नेपाल) पुस्तकहरूमा रञ्जितकारहरूलाई मध्यकालीन नेवार समुदायभित्रको एउटा जातिको रूपमा उल्लेख गरिएको पाइन्छ । त्यसै गरी जोन वेल्फोनसनको (अ हिस्टोरी अफ नेपाल), ऋषिकेश शाहको (एन्सेन्ट एण्ड मेडिभल नेपाल), गाविन फोडको (द ब्ल्याकवेल कम्पारिजन टु हिन्दूजम) मा छिपा रञ्जितकारहरूको बारेमा उल्लेख गरिएको पाइन्छ ।

अध्ययनको सिलसिलामा धनबज्र बज्राचार्य र कमल प्रकाश मल्लको गोपाल वंशावली, बज्रचार्यकै लिच्छविकालीन अभिलेख, प्राचीनकालको इतिहास, बाबुराम आचार्य, पुरातत्व विभागले प्रकाशन गरेको प्राचीन नेपालको विभिन्न अङ्क, लिच्छविकालको अभिलेख, मल्ल कालको अभिलेख तथा पूर्णिमा, रोलम्वामा प्रकाशित विभिन्न ऐतिहासिक सामग्रीहरूमा पनि रञ्जितकारहरू बारे सामान्य उल्लेख गरिएको पाइन्छ ।

# दोस्रो अध्याय

# रञ्जितकारहरूको परिचय, नेवार समुदायको परिचय र जाति विभाजन

## २.१. अध्ययन क्षेत्रको परिचय

काठमाडौं महानगरको अति पुरानो व्यस्त रहने (स्थान) क्षेत्र नेवार समुदायको वाहुल्यता र नेवारहरूमा पनि अधिकांश रञ्जितकारहरू मात्र बसोबास गर्दै आइरहेको काठमाडौं महानगर वडा नं. २०, २१ र २३ गरी तीनवटा वडाको सिमाना रहेको मजिपाट टोल सामाजिक र सांस्कृतिक महत्व राख्ने टोल (स्थान) को रूपमा लिइन्छ । सामान्य रूपमा यस क्षेत्रको नाम जनमानसमा त्यति प्रचार प्रसार नभए तापनि यस टोलको आफ्नै विशिष्ट पहिचान बोकेको देखिन्छ । यस क्षेत्रमा यी जाति बाहेक मानन्धर १, गुभाजु १, नापित २, कुश्ले २ घरको मात्र बसोबास रहेको देखिन्छ । अध्ययनको क्षेत्र यी तीनवटा वडाको सिमानाबाट नक्सामा देखाएको मजिपाट चोकबाट पूर्वपट्टि मञ्जुश्रीसम्म बसोबास गर्ने रञ्जिकार (छिपा) रहेका छ । यसरी अध्ययन गर्दा वडा नं. २३ को ३ वटा घर र वडा नं. २१ को २२ वटा घरलाई समेटिएको छ ।

## २.२ नेवार समुदायको जातिय संरचना र रञ्जितकारहरू

आदिकालदेखि नै काठमाडौं उपत्यका कान्तिपुरमा नेवार जातिको बसोबास र कारोबार रहेको इतिहासको कालखण्डबाट पुष्टि हुन्छ । नेवार जाति नेपालमा कहाँबाट कसरी आएका हुन्, त्यसको प्रमाणिक नभए तापनि यिनीहरू यहाँका आदिवासी नै हुन् भन्नेमा दुईमत देखिँदैन । नेपालमा विभिन्न भाषा बोल्ने, धर्म मान्ने, संस्कृति मान्ने व्यक्तिहरू बसोबास गर्दछन् । यी भाषाभाषीहरू जस्तैः नेपाल भाषा नेवारी बोल्ने भाषी नेवार समुदाय हुन् । नेवार समुदायको जातिय संरचनामा विविधता भए तापनि धार्मिक र सांस्कृतिक रूपमा यिनीहरूमा एकरूपता रहेको पाइन्छ । नेवार समुदायको अन्य राई, गुरूङ, लिम्बूहरूको जस्तै एक जातिय प्रणाली रहेको पाइँदैन यसैकारण गोपाल वंश, किराँत वंश, लिच्छवी वंश, ठकुरी कर्णाट, मल्ल वंशका समयमा नेपालमा पसेका मानिसहरूको सम्मिश्रण नै वर्तमान नेवार समुदायको जातिय संरचना हुनसक्दछ । यिनै संरचनाभित्रको एक जाति रञ्जितकार (छिपा) हुन् । यी जाति पहिचान सम्वत् २५२६ वर्ष पहिलेदेखि नै नेपालमा भएको पाइन्छ (भिक्षु बुद्धदास, १९९६) । नेवारहरू जातिय हिसावमा सयौं जातिमा विभाजित रहेको र धार्मिक रूपमा शाक्य, बज्राचार्य, मानन्धर, महर्जन, रञ्जितकार आदिले बौद्धधर्म र जोशी, श्रेष्ठ, प्रधान, राजभण्डारी, अमात्य आदिले बौद्धधर्म मान्ने गर्दछन् । यस्तो भए तापनि यिनीहरूले एक आपसमा धार्मिक सहिष्णुता भने कायम राखेको देखिन्छ । रञ्जितकारहरू पनि यी नै संरचनामा आधारित रहेको पाइन्छ ।

## २.३ रञ्जितकारहरूको बसोबास गर्ने ठाउँहरू

ऐतिहासिक र सांस्कृतिक रूपमा रञ्जितकारहरूको वस्ती काठमाडौं महानगरको वडा नं. २०, २१ र २३ मा पर्दछन् । यसको अलावा यिनीहरूको १२, २२, १९, १८, १३, १५, १७, ३०, ३१ र ३३ मा वस्ती रहेको पाइन्छ । तर जनसंख्याको हिसावले यहाँ सामान्य देखिन्छ । यी जातहरू काठमाडौंको अलावा भक्तपुर, गोलमडी, ठिमीको दुई पोखरी, साँगा, बनेपा, धुलिखेल, पाँचखाल, नाला, बतासे, ललितपुरको मंगलबजार, बख्खुमबहाल, कीर्तिपुरको पाँगा, काठमाडौं उपत्यका बाहिर पोखारा, वीरगञ्ज, हेटौंडा, चितवन, विराटनगर, सर्लाही, बाँके, झापा, इलाम, यस्तै गरी विभिन्न जिल्ला, सदरमुकाममा यिनीहरूको बसोबास रहेको छ । उपत्यकाका ठाउँ बाहेक अन्य ठाउँहरू बसाइ सराइँ भई गरेको देखिन्छ ।

## २.४ का.म.न.पा. २१ मा बसोबास

काठमाडौं महानगर वडा नं. २१ मा रञ्जितकारहरूको आधिकारिक र मौलिक बसोबासको केन्द्र मानिन्छ । यी जातिका व्यक्तिहरू प्राचीन समयदेखि नै यहाँ बसोबास गर्दै आइरहेका देखिन्छन् । यस वडामा बस्ने मानिसहरूको जनसंख्या लगभग ५४५ अर्थात् ७८० को हाराहारीमा यी जातिका मानिसहरूको बसोबास रहेको छ । यस वडा अन्तर्गत मजिपाट मञ्जुश्री क्षेत्र विशेष घनावस्ती भएको क्षेत्र हुन् यसको अलावा किलावहाल, ढोकावहाल, मिखावहाल, ज्यावाहाल, जैसिदेवल, मतुलाश्री, दलाक्षी, इतुवहाल, लगन, तःवहाल, गोफल, गणवहाल, न्हुवावहाल, वाकुननी, न्हसननी, तिसननी, उजमुग गल्ली, तवहाल आदि टोल, चोकहरू यिनीहरूको बसोबास क्षेत्र हुन् ।

## २.५ रञ्जितकारको जनसङ्ख्या

एक अध्ययन २०५८ सालको जनगणनाअनुसार नेवार समुदायको जनसङ्ख्याको आधारमा यी रञ्जितकार जातिको जनसङ्ख्या १.२ प्रतिशत १४,९४३ रहेको छ । जसमा महानगरको वडा नं २०, २१ र २३ गरी जम्मा ३.२७% अर्थात् ११३६ यसको ७०% अर्थात् लगभग ७२५ रञ्जितकारहरू वडा नं. २१ मा बसोबास रहेको देखिन्छ । अध्ययनको क्षेत्र यस २१ वडाअन्तरगत मजिपाट मञ्जुश्री क्षेत्रभित्र जम्मा २२ घरधुरी रहेको छ । ४४ परिवारमा विभाजित यहाँको जनसङ्ख्या २३५ रहेको देखिन्छ ।

## २.६ रञ्जितकारको नामकरण

प्राचीनकालदेखि नेपालमा धागो, कपडामा विभिन्न जडिबुटीद्वारा तयार गरिएको रङ्गहरूको मिश्रण धागो वा कपडालाई रंगिन पार्ने काम गरिआएका व्यक्तिहरूलाई खास गरी नेपाल (यहाँ) नेवारीमा 'छिपा' भनिन्छ । "छिइगु पायगु" अर्थात् धागोलाई रंगाउने,

सुकाउने अनि रंगिन बनाउने काम गर्नेलाई पछि गएर जयस्थिति मल्लको पालामा कार्यविभाजन गर्दा रञ्जितकार भनि नामाकरण गरिएको मानिन्छ । यहाँ मात्र होइन कि भारततिर पनि कपडा रंगाउने व्यक्तिलाई छिपा नै भन्ने गरिएको पाइन्छ । छापेर राख्ने भएकोले छिपा नै भन्ने गरिएको छ ।

### २.६.१ रञ्जितकार हिन्दूमार्गी वा बौद्धमार्गी

काठमाडौं महानगरपालिका वडा नं. २१ मजिपाट मञ्जुश्रीमा बसोबास गर्ने यिनीहरू बौद्ध धर्मावलम्वी मानिन्छन् । यस क्षेत्रमा पुर्खाहरूले स्थापना गरेका चैत्य, मन्दिर र विहारहरूबाट पनि यस कुराको पुष्टि भएको देखिन्छ ।

## २.७ अन्य नेवार समुदायहरूसँगको समानान्तर र भिन्नता

रञ्जितकार पेशाको कारणले नामकरण भएको नेवार समुदायकै एउटा समुह हो । धर्म, संस्कृति र सामाजिक पेशाको कारणले सामान्यतया परिवर्तन हुँदैन । यस अर्थमा अध्ययनको मुख्य क्षेत्र तोकिएको का.म.न.पा.वडा नं. २१ का रञ्जितकार (छिपा) हरूको सामाजिक तथा सांस्कृतिक जनजीवन, आमोद-प्रमोद, रहन-सहन, रीतिरिवाज र परम्पारको मान्यतासँग समानता देखिन्छ । पेशाको हिसावले रञ्जितकारहलाई छिपा भनि भनिएबाट प्राकृतिक रङ्ग समायोजन र यसका सांस्कृतिक मान्यता, महत्व र विशिष्टतासुन्य नेवार समुहको तुलनामा भिन्न पाइन्छ ।

रञ्जितकारहरू मुख्य पेशा धागो, कपडा, सांस्कृतिक तथा सामाजिक जनजीवनले महत्व दिएका विभिन्न वस्तुहरूका रङ्गहरूको पहिचान, समायोजन र परिचालन गर्नु रहेको देखिन्छ । नेपाल प्राचीनकालदेखि नै आर्य संस्कृतिबाट बढी प्रभावित भएको भए तपानि मंगोलियन संस्कृतिको पनि उपस्थिति रहेको देश हो । रञ्जितकारहरू आर्य मंगोलियन वा अन्य जुनसुकै धर्मले मान्यता लिएको रङ्गहरूलाई आवश्यकताअनुसार प्रस्तुत गर्न सक्षम रहेको समुह हो । यिनीहरूको बसोबास रहेको मजिपाटलाई मञ्जुश्री टोल भनी नामकरण भएबाट यो समूह बौद्ध मतानुसार रङ्ग समायोजन गर्न पनि सक्षम रहेर नै बौद्ध गुरू मञ्जुश्रीको नामसँग यस टोल साक्षात्कार भएको पाइन्छ ।

विभिन्न धार्मिक, सांस्कृतिक, सामाजिक र व्यक्तिगत धागो, पोशाक, मूर्ति, गजुर, मन्दिर, टोपी र श्रीपेच आदि वस्तुहरूमा मागअनुसारको प्राकृतिक रङ्ग सजाउनु यस समुहको पुर्ख्यौली पेशा हो । छिमेकी मुलुक भारत र नेपालको तराई क्षेत्रमा समेत यस पेशामा रहेका अन्य समुहको नाम पनि छिपा रहेको पाइन्छ ।

## २.८ जातिय स्तर

प्रकृतिले विभिन्न बोट-विरूवा, वनस्पति र पुष्पहरूमा विभिन्न रङ्गको श्रृजना गरी प्राकृतिक सान्दर्यता प्रदान गरेको पाइन्छ । मानव जातिले पनि प्रकृतिबाट नै प्राप्त भएका

विभिन्न रङ्गहरूलाई आफ्नो रूचीअनुसार सौन्दर्य सामग्रीको रूपमा ग्रहण गर्दै आएको छ । मानव इच्छाका रङ्गीन संसार सिर्जना गर्ने कालिगढहरूलाई प्राचीनकालदेखि नै आर्य समाजमा रञ्जितकारको दर्जा दिएको पाइन्छ । विभिन्न धर्म, संस्कृति, सभ्यता र सामाजिक रीतिरिवाजमा विभिन्न रङ्गहरूको छुट्टाछुट्टै विशेषता पाइन्छ । यो विशिष्टतालाई मूर्तरूप प्रदान गर्न रञ्जितकारहरूले योगदान पुऱ्याउने हुँदा यो समूहलाई प्राचीनकालदेखि नै उच्च स्थान दिएको देखिन्छ । मन्दिर, गजुर, छत्र, पोशाक, धार्मिक तुल, चदुवा आदि महत्वका वस्तुहरूमा धार्मिक मागअनुसार रङ्ग समायोजन गरी कलात्मक रूपमा प्रस्तुत गर्न सक्ने क्षमता रञ्जितकारहरूमा रहेकोले यिनीहरूको स्थान सामाजिक तथा सांस्कृतिक रूपमा उच्च रहेको देखिन्छ ।

मल्लकालबाट विभिन्न पेशामा रहेका समुहहरूलाई यो पेशाको विकासको प्रयोजनमा लगाउने उद्देश्यले जो जुन पेशामा संलग्न छ उसले सोही पेशामा संलग्न रहेको परिवारको सदस्यसँग मात्र वैवाहिक जीवन सिर्जना गर्ने व्यवस्था गरियो । पेशाकर्मी व्यक्ति र समूहलाई अपहेलित गर्दै जाने संस्कारको विकास हुँदै जानाले एक जातिले अर्को जाति माथि जातीय भेदभावको प्रथा बसाउन थाले जसको परिणामस्वरूप दशकौंसम्म नेवार समुदायभित्र पनि केही वर्गले रञ्जितकारहरूलाई तल्लो वर्गका रूपमा भेदभाव गर्ने गर्दथ्यो । तर हाल त्यस्तो व्यवहार भएको पाइँदैन तापनि नेवार समुदायभित्र हालसम्म यस जातिको अर्को जातिसँग मागी विवाह भएको देखिँदैन ।

# तेस्रो अध्याय

## ३.१. सामाजिक संरचना

नेवारी समाजको एउटा विशिष्ट रूप नै एक समुदायमा एकाकार भई व्यवसाय संचालन तथा बसोबास गर्नु हो । यिनीहरू (रञ्जितकार) प्राचीनकालदेखि नै परम्परागत पेशाको रूपमा कपडा, धागो तथा अन्य वस्तुहरूमा आकर्षक रङ्ग सजाउने व्यवसायमा आवद्ध रहेकोले पेशाको स्थायित्व र सुरक्षाको लागि एउटै समुहमा रहेर व्यवसाय सञ्चालन र बसोबास गर्दै आएको पाइन्छ । व्यवसायमा आवद्ध भएकोले यिनीहरूको पेशाको स्थायित्व र सामाजिक सुरक्षाका दृष्टिले आफ्नो सीप र कलाकौशल प्रखर बनाई राख्न समुदायभित्रै बसेर परम्परागत व्यवसाय संचालनको आवश्यकता महसुस गरेको पाइन्छ ।

## ३.२ घरपरिवार

यो समुहमा अधिकांश पारिवारिक जीवन संयुक्त परिवारमा रहने गरेको पाइन्छ । आमाबाबुको जीवनकालमा उनीहरूका सन्ततीहरू छुट्टि अलग हुनु नराम्रो रूपमा ग्रहण गरिन्छ । परिवारको जेठो नाताको व्यक्तिले घरमुली हुने गर्दछन् । सामाजिक, सांस्कृतिक र पारिवारिक घरव्यवहार संचालन गर्ने प्रमुख दायित्व यी नै मुलीको हुन्छ । मुलीलाई उचित सहयोग र व्यवस्थापनमा संलग्न रहनु सम्पूर्ण घरपरिवारको कर्तव्य हुने गर्दछ । पारिवारिक मर्यादाक्रमअनुसार हजुरबा, हजुरआमा, आमाबाबु, छोराछोरीतर्फ जेष्ठानुगत रूपमा घरमुलीको दायित्व हस्तान्तरण हुँदै जाने परम्परा रहेको पाइन्छ ।

### ३.२.१ कार्य विभाजन

यस जातिमा प्रायः पारिवारिक जीवन संयुक्त हुने गर्दछ । परिवारमा जेष्ठताअनुसारको घरको मुलीको सदस्यहरूलाई जिम्मेवारी सुम्पिएको हुन्छ । आर्थिक रूपमा सम्पन्न परिवारका सदस्यहरूले आफ्नो मर्यादाअनुरूप आफ्नो जिम्मेवारी पूरा गर्ने गरेको पाइन्छ भने केही परिवारमा आर्थिक अवस्था कमजोर भएका कारणले समानरूपले परिवारमा अन्य सदस्यहरूले सुम्पिएको जिम्मेवारी पूरा गर्न हिच्किचाउने, कहिले काहीँ द्वन्द्व सिर्जना गर्ने गर्दछन् । घर गृहस्थी सञ्चालनको क्रममा घरमुली अर्थात् बाजे/बज्यै आफ्ना छोराछोरीलाई जेष्ठताअनुसार घरधन्दाको कामको विभाजन गरी दिएको हुन्छ । मुलीहरूले घरका दैनिक कार्य सञ्चालन गरिरहेको हुन्छ भने जेष्ठ छोरा वा छोरीलाई घरमा आवश्यक रेखदेख, आफूभन्दा सानाहरूको लालन-पालन, रेखदेख, शिक्षा, स्वास्थ्य जस्ता आधारभूत आवश्यकता पूरा गर्नका लागि आमाबाबुलाई सघाउने काम गर्दछन् । यसरी नै अन्य तहगत सन्तानको लागि विभिन्न जिम्मेवारी सुम्पिएको पाइन्छ ।

### ३.२.२ नातागोता

यी जातिको पारिवारिक संरचना कसैको ठूलो कसैको सानो नातागोता रहेको हुन्छ । यस जातिमा नातागोताका रूपमा बुबाको नातामा बाजेका दाजुभाई, दिदीबहिनी, बाबुको दाजुभाई (काका, काकी, ढुलबा, ठुली आमा) दिदीबहिनीसम्मलाई १३ दिने नातागोताको रूपमा लिने गरिएको पाइन्छ । साथै आफ्नै आमापट्टिको छोरी अर्थात् काका, ठुलबाका विहे गरिसकेका छोरीहरूलाई चाहिँ १ दिने नातागोताको रूपमा लिने गरिन्छ । मृत्यु संस्कारको कार्यमा दिदी बहिनीहरूको भूमिका र आवश्यकताले महत्व राख्ने गर्छ । साथै विवाह भएका दिदी बहिनीहरूलाई चाहिँ चोखो मान्ने गरिन्छ ।

आफ्नै परिवारका १३ दिने नातागोताका दाजुभाईलाई व्यवहारिक रूपमा सही भएको ठान्दछन् । यसभन्दा अघिल्लो पुस्तालाई अंगिकार गर्दा सामाजिक रूपमा राम्रा भए तापनि आर्थिक हिसावले व्यवहारिक नहुने हुनाको साथै एक आपसमा पहिचान नहुने भएकोले तिनीहरूलाई नातागोताको रूपमा लिइन्न । यिनीहरूमा बाबुपट्टिका ७ (सात) पुस्तेसम्म दाजुभाइमा विहे गर्न सक्ने प्रचलन रहेको पाइन्छ । यसै गरी आमाको नातामा बाजेको दाजुभाइका छोराछोरी र तिनीहरूबाट जन्मिएकासम्मलाई आफ्नो नातागोताका रूपमा लिने गर्दछन् । यसले गर्दा यिनीहरूका छोराछोरी बीच वैवाहिक कार्य भएको पाइँदैन ।

### ३.२.३ शैक्षिक अवस्था

गुणस्तरीय शिक्षा प्राप्त व्यक्तिहरूले मात्र समाजलाई डोऱ्याउन सक्दछ भने अशिक्षितहरूबाट यसको अपेक्षा गर्न सकिन्न । समाजलाई परिचित र परिष्कृत गर्ने सन्दर्भम रञ्जितकार (छिपा) हरूको शैक्षिक स्थितिको अध्ययन गर्दा त्यति सन्तोषजनक रहेको देखिँदैन । यद्यपि अध्ययन क्षेत्र मजिपाट मञ्जुश्रीका रञ्जितकारहरूमा शिक्षाप्रतिको आकर्षण उत्साहपूर्ण रहेको पाइन्छ । आजकल शिक्षा प्रदान गर्ने सवालमा यिनीहरूले छोराछोरीलाई भेदभाव गरेको पाइँदैन । दुबैलाई बराबर अवसर र सकेसमम उच्च, आधुनिक शिक्षा दिलाउन सरकारी स्कुल, कलेजभन्दा निजी विद्यालयमा पढाउन नै बढी जोड दिएको पाइन्छ । आफ्नो पेशालाई भन्दा बढी शिक्षालाई प्रोत्साहन दिएकै कारण यी जातिका मानिसहरू सरकारी वा अर्धसरकारी निकायमा उच्च ओहदामा समेत पुग्न सफल भएको देखिन्छ । तुलनात्मक रूपमा यहाँका मानिसहरू निजामती सेवामा खासै रहेको पाइँदैन । उच्च शिक्षा प्राप्त गरेर पनि व्यवसायिक रूपमा सफल हुन सकिन्छ भन्ने मान्यता राख्ने युवावर्ग सरकारी जागिरभन्दा अन्य पेशामा आफूलाई संलग्न गर्न रूचाएको छ ।

प्रा.भाइराजा रञ्जितका अनुसार मजिपाट मञ्जुश्रीका यस जातिको शैक्षिक अवस्था प्राथमिक तहमा अध्ययन गर्नेको संख्या २७.०२%, एस.एल.सी. १८.९०%, प्रमाणपत्रमा ७.०८%, स्नातकमा ३.१४%, स्नातकोत्तरमा २.८७% र विद्यावारिधिमा ०.३०% रहेको देखिन्छ । साक्षरको संख्या २४.३८% रहेको छ भने महिला साक्षर १३.३९% रहेको पाइन्छ ।

### ३.२.४ स्वास्थ्य र सरसफाइ

यी रञ्जितकार जातका व्यक्तिहरूले प्रायः गरेर स्वास्थ्य र सरसफाइमा ध्यान दिएको पाइन्छ । यिनीहरूको बसोबास भएको स्थानमा प्रायः जस्तो सफा सुग्घर नै देखिन्छ ।

### ३.२.५ कपडा रंगाउने व्यवसाय प्रविधि

नेपालमा विभिन्न भाषा बोल्ने समुदायहरूमध्ये एक भाषा नेपाल भाषा नेवारी बोल्ने नेवार समुदायभित्रको एक उपजाति (छिपा) रञ्जितकार हो । कपडा रंगाउने व्यवसायबाट नै आफ्नो स्थान ओगट्न सफल कलाकार यी जाति नै हुन् । यो जातिले आफ्नो पेशा सादा कपडामा रङ्ग रंगाउने र कपडालाई घाममा सुकाउने यसै कार्यलाई नेपाल भाषा नेवारीमा छित-पात (छितको अर्थ रंगाउने र पातको अर्थ सुकाउने) भनिन्छ ।

थरिथरिका जडिबुटीहरूबाट तयार पारिएको विभिन्न मिश्रण रङ्गबाट सेतो कपडा र उनी धागोलाई रंगाई मानवीय जीवनलाई सौन्दर्यमय तुल्याउने काम यस जातिले गर्दै आएको पाइन्छ ।

विशेष गरेर रञ्जितकारहरूको रङ्ग रंगाउने प्रविधि (तुयुग कचिगु का वसिधलम् वचुगु रङ्ग छिगु) माटोको घ्याम्पामा काँचो सेता धागोलाई नीलो रङ्ग लगाउने यी जातिको विशेषता पाइन्छ । नीलो रङ्गको विशेषता पनि पाइन्छ । यस रङ्गको धागोलाई चार दोब्बर पारेर देवताहरूको रक्षा गरून् भन्ने भावना राखेर बच्चा जन्मेको १५/१६ दिनपछि (कान छेडिसकेपछि) कान, नाडी, कम्मर र खुट्टामा बाँधिदिने चलन पनि पाइन्छ । यसले गर्दा बच्चा कतिको बढ्यो भन्ने पनि थाहा पाउन सकिन्छ । कपडा, धागो रंगाउने प्रविधिमा प्राकृतिक जडिबुटी (हल, हथ, धालेखोला) अनारको बोक्रा, हथौडालाई मिसाएर यसलाई पिनेर, उमालेर रङ्ग बनाएर धागोलाई रंगाउने काम गरेको पाइन्छ । यसको लागि जडिबुटी ल्याउने काम तामाङ जातिहरूले गरेको पाइन्छ । करिब २५ लिटर रङ्ग बनाउनको लागि गार्नेट ५ तोला, तेजाब १ औंस, नाइट्री ५ तोला, फिटकिरी १ पाउ चाहिन्छ । सेतो कपडालाई पानीमा डुबाएर कपडाको माड गएपछि घाममा सुकाउने गरिन्छ । खास गरेर घ्याम्पोमा कपडा रंगाउने काम महिलाले बढी मात्रामा गरेको पाइन्छ भने कपडामा छाप लगाउने काम विशेष गरेर केटाहरूले गर्दै आएको देखिन्छ । कपडामा रङ्ग लगाएपछि घाममा सुकाउने गरिन्छ । त्यसपछि विभिन्न बुट्टाहरू कोरेको काठको छापलाई रङ्गमा भिजाएर कपडामा बुट्टा राख्ने गरिन्छ । यसरी कपडामा छाप लगाएपछि एक प्रकारको गोलो काठको मूढाले कपडालाई थिचेर, पिटेर (Iron) राम्रो सफा गर्ने काम गरिन्छ । यसरी काठले थिचेर कपडालाई Iron राख्ने जस्तो काम विशेष गरेर रञ्जितकारहरूले मात्र गर्दै आएको पाइन्छ । यसै गरी विभिन्न धार्मिक उत्सवहरूमा औपचारिक रूपमा राजाको सवारी हुने बेलामा विभिन्न रङ्गको तीनकुने रङ्गको झण्डा बनाउने र सजाउने काम पनि गरिँदै आइरहेको पाइन्छ ।

स्थानीय प्रज्ञानिधि रञ्जितकारका अनुसार पहिला पहिलादेखि नै नेवारी पुर्खाहरूले मन्दिरको दुबैपट्टि राखिने तीनकुने झण्डाले नेपाललाई विश्वमा चिनाएको पाइन्छ । यो हाम्रो देशको लागि गौरवको कुरा हो । रञ्जितकार (छिपा) हरूले त्यही तीनकुने राष्ट्रिय झण्डामा पनि रङ्ग लगाउने काम गर्दै आइरहेको जाति हो । यस बाहेक यी जातिको व्यवसाय स्त्रीहरूको सौभाग्यको रूपमा लिने रातो धागो बनाउने, सजाउने त्यसमा (कार्चोप) पहेंलो रङ्गको धागो राखेर सजिसजाउ गर्ने काम गरेको पाइन्छ । साथै सौभाग्यको रूपमा लगाउने चुरा पसल, सतानी (प्राकृतिक कपालको) Neak बनाउने, बारला भर्ने (चुनरी छुइगु), चुनरीमा रङ्ग लगाउने जस्ता कामबाट प्रख्यात भएको देखिन्छ । हालसम्म पनि मञ्जुश्रीको एक परिवार यस्तै काम गर्दै आइरहेको पाइन्छ । यी कामहरू स्व. राजा वीरेन्द्रको पालासम्म पनि गर्दै आएको देखिन्छ । यसै प्रसंगमा स्थानीय ध्यानगोविन्द रञ्जितकारका अनुसार कपडाको जुत्ता, (रातो, कालो, निलो जुन सुकै) मा बुट्टा भर्ने काम (चाँदीको) विभिन्न थरिको जरी, सितारा, पोटे, सलमा, बतु काम पनि गर्दै आइरहेका यी जाति हुन् । सैनिकहरूको पद अनुासरको दर्ज्यानी चिन्हमा, मानपदवीहरूमा विभिन्न रंगीन बालाहरू पनि यी रञ्जितकारहरूले नै गर्दै आइरहेको देखिन्छ । विभिन्न राष्ट्रिय, धार्मिक र सामाजिक पर्वहरूमा महाराजा, रानी, राजपरिवारका अन्य सदस्यहरूले लगाउने पोशाकहरूमा झिलिमिली देखिने बुट्टा भर्ने काम पनि यी जातिले गरेको पाइन्छ ।

रङ्ग लगाउने कामबाट नै आफ्नै परिचय झल्काउने यी रञ्जितकारहरूले हाल आएर यस कामलाई महत्व नदिएको देखिन आएको छ । करिब २०/३० वर्ष अगाडिसम्म यो काम गर्दै आइरहेकोमा अहिले आएर लोप नै भइसकेको देखिन्छ । तर भक्तपुर, बनेपा, थिमि, साँखुमा चाहिँ फाटफुट रूप देखिन्छ । लोप हुनेको प्रमुख कारण यस व्यवसायलाई आधुनिकीकरण गर्न नसक्नुलाई नै लिइएको छ । अर्को प्रमुख कारण समाजमा यी जातिको पेशागत कामलाई तुच्छ र हेलाको दृष्टिले हेर्नु पनि हो, यो समाजको नकारात्मक सोचाइ मान्न सकिन्छ । साथै यी जातिका मानिसहरूमा समयानुकूल परिवर्तन भई अन्य आम्दानीका अवसरहरू प्राप्त हुनु हो ।

यी जातिको मौलिक परम्परागत रंगाउने, बुट्टा भर्ने आदि काम प्रायः लोप भएको कारण यसको सम्वर्द्धन, प्रवर्द्धन र विकासको लागि समाजका केही व्यक्तिहरूले यस कामलाई निरन्तरता दिन चाहेको खण्डमा यसको संक्षणको लागि आवश्यक प्रविधि र आर्थिक सहयोग पुऱ्याउने जमर्को यी जातिको जातिय संगठन “रञ्जितकार समाज” ले आफ्नो नीतिभित्र राखेको देखिन्छ ।

परम्परागत काम छोडी अन्य व्यवसाय, नोकरीतर्फ उन्मुख यी जातिको आर्थिक अवस्था मध्यम देखिन्छ । यसो भए पनि शहरी इलाकाका मानिसहरू आफ्ना छोराछोरीलाई निजी विद्यालयमा, कलेजमा अध्ययन गराउन सक्षम भएको देखिन्छ । ग्रमीण इलाकाका प्राय:जसो सरकारी विद्यालयमा अध्ययन गराउन बाध्य छन् । यस जातिका मानिसहरू हाल

विभिन्न पेशामा आवद्ध भएको देखिन्छ । यस जातिका मानिसहरू आजभोली तालिकामा देखाइए अनुसार विभिन्न पेशामा संलग्न रहेको देखिन्छ ।

| क्र.सं. | व्यवसाय (पेशा) | प्रतिशत | व्यवसायको स्रोत |
|---|---|---|---|
| १ | निजी तथा सरकारीतर्फ | २५.५८ | अध्ययन, अध्यापन, इन्जिनियरिङ, स्वास्थ्य, ट्राभल एजेन्सी, उद्योग, वित्तिय संस्था, बनौता (पसलमा बस्ने) । |
| २ | पसल | १७.४४ | औषधी, किराना, टेलरिङ्ग, भाँडाकुँडा |
| ३ | सीपमूलक | २६.१६ | कपडाको जुत्ता, सलमा भर्ने, धागो बनाउने, कपडा रंगाउने वा छाप्ने, स्वीटर बुन्ने, व्याग बनाउने, ब्यूटिसियन, हस्तकला, गार्मेन्ट आदि । |
| ४ | ठेकेदारी | ५.८२ | स-साना ठेकेदारी काम । |
| ५ | वैदेशिक रोजगारी | ११.६३ | अमेरिका, बेलायत, अष्ट्रेलिया, फ्रान्स, जापान, इण्डिया, खाडी क्षेत्र । |
| ६ | उद्योग | ८.७२ | स-साना उद्योग, प्रेस, घरेलु उदोग, स्वीटर बनाउने, सिरक बनाउने, खास्टो बनाउने, सिलाई, फिल्मी बनाउने, चित्रहरू बनाउने आदि । |
| ७ | यातायात | ४.६५ | बस, ट्याक्सी, टेम्पो, ट्रक व्यवसायी । |

*स्रोतः नेवाः समाज, ३३१ ।*

# चौथो अध्याय
# संस्कृति

नेवार समुदायभित्रको एक जातिको रूपमा परिचित रञ्जितकार (छिपा) हरूको संस्कृति अन्य नेवारहरूको जस्तै समान देखिन आएको छ । यिनीहरूको संस्कृति परम्परागत धर्मअनुसार भएको पाइन्छ । यिनीहरूले मनाउने सांस्कृतिक चाडपर्वहरू उल्लेख गरिएअनुसार भएको पाइन्छ ।

## ४.१ रहन-सहन

### ४.१.१ खानपिन

साधारण नेपाली जनताको खानपिन जस्तै नेवार समुदायभित्र खानपिनमा खासै भिन्नता पाइन्न । तथापि यी नेवार जातिमा खाने पिउने आदतमा केही अन्तर रहेको देखिन्छ । साधराणतया विहान बेलुका दालभात (मौसम अनुसारको) तरिकामा दन गुजारा गर्ने नेवारहरू जस्तै रञ्जितकारहरू पनि योभन्दा खासै फरक पाईंदैन । नेवार जातिमा बिहान बेलुका प्रायः दालभात नै प्रचलन रहेको भए तापनि भोज भतेरमा बढी जीवन बिताउने गरिएको पाइन्छ ।

मानिस जन्मदेखि मरोणापरान्त पनि कुनै न कुनै रूपमा भोज भतेर गरी रमाउनु वा दिन बिताउनु यिनीहरूको रहनसहनभित्र पर्ने अन्तरवस्तु हुन् । मानिसको जन्म हुँदा, न्वारान गर्दा, जन्म दिन, ब्रतवन्ध, विवाह, जन्को, पास्नी आदि इत्यादि गर्दा पनि भोज, पूजा-पाठ गराउँदा पनि भोज गर्नु यिनीहरूको विशेषताभित्र पर्ने गर्दछ । नेवार जाति अन्य जातिभन्दा खानपिनमा बढी सौखिन भएको देखिन्छ । विहान बेलुकाको खानाको परिकारमा मासु (राँगाको) लाई प्राथमिकता दिने गर्दछन् । दिउँसोको खाजा खाँदा पनि यिनीहरू सकेसम्म मासु राखेर चिउरा खान मन पराउने गर्दछन् । गहुँको रोटी, आलुको तरकारी, गुन्द्रुक साँधेर खाने यिनीहरूको खानपिनमा प्राथमिकतामा पर्ने गर्दछ । यस जातिका मानिसहरू भोजभतेर गर्दा खानपिनमा प्रयोग गर्ने वस्तुहरू निम्न देखिन्छन् ।

ताइचिन धानको च्यूरा (सकेसम्म), आलु, हरियो साग, केराउ, बोडी, सिमी, राज्मा, सानो केराउ (चारथरिको गेडागुडी), मासुको परिकारमा कवाफ, (ट खाला र थल्थले), सन्या खुना, भुटन, कचिला (काँचो मासुलाई मुछेर, मेठी तेलले झानेर बनाउने), काउली, परवल, मुलाको अचार, सानो केराउ, काँक्रो, आलु (मिसाएर बनाउने) सामान्यतयाः भोज खाइसकेपछि यसलाई पचाउनको लागि वैज्ञानिक हिसावले पनि महत्व राख्ने मेठी र सानो केराउ मिसाएर बनाएको र काँचो मूला, केराउ, गाजर, सुन्तला आदि । मिठाइमा दही, मिठाई, लालमोहन, बर्फी, लाखमरी खाने गरेको पाइन्छ । यस जातिका मानिसहरूले

पर्वअनुसार खानपिनमा उत्तिकै ध्यान दिएको देखिन्छ साथै समय अनुसार कुन महिनामा के खाने भन्ने पनि यिनीहरूले विशेष ध्यान दिइरहेको देखिन्छ । यसबारे स्थानीय आइतमान भन्दछन्- वैशाख महिनामा गर्मी हुने भएकोले अक्षेतृतीया दिनमा सख्खर, पानीमा मरिचको धुलो राखेर भगवानलाई चढाई पिउने गरेको पाइन्छ । असार १५ गते दही च्यूरा खाने, श्रावणमा खिर, भाद्र महिनामा गणेश चौथीको दिन विभिन्न गेडागुडीलाई भुटेर खाने, असोज महिनामा त दशैंको बेला मासुको परिवार, कार्तिकमा फलफूल, अण्डा, माछा, जाँडरक्सी (अलिअलि) खाने गरिन्छ । माघ १ गते घ्यु चाकु, लालमरी, तिलको लड्डु, तिलहरी, काउलेको तरकारी, तरूल (कसैले भुटेर र कसैले काँचो, कसैले उसिनेर) मात्र पनि खाने गरेको पाइन्छ । यसैगरी धान्यपूर्णिमाको दिन चामलको पीठोको योःमरी, लाचामरी, चँतामरी, माँस वा मुँगी वाडा र जाँड बनाएपछि निस्कने बुला, (मासु हालेर) पकाउने गरिन्छ । नेवार जातिहरू मध्येमा यी जातिले पनि विभिन्न अवसरहरूका बेलामा थरिथरिको खानपिन गरेको पाइन्छ ।

### ४.१.२ भाषा

रञ्जितकार (छिपा) नेपालको आदिवासी भएकोले यिनीहरूको बोलिचालीको भाषा वा मातृभाषा नेपाल भाषा नेवारी नै हो । यिनीहरू सरकारी कामकाजमको भाषालाई त्यत्तिकै महत्व दिने गर्दछन् तापनि सामाजिक रूपमा मातृभाषा नै यिनीहरूको मौलिक भाषा मान्दै आइरहेको पाइन्छ । नेवारहरूको मातृभाषा नेवार भए तपानि ठाउँअनुसार बोल्ने प्रकृतिमा फरक पर्ने देखिन्छ । रञ्जितकारहरूको पनि ठाउँअनुसार नै भाषा बोल्ने फरक देखिन आएको छ । जस्तैः काठमाडौंका रञ्जितकारहरू स्पष्ट नेवार भाषा नै बोल्ने गर्दछन् भने भक्तपुर, बनेपा, धुलिखेल, काभ्रे, पाँचथर, पोखराका बासिन्दाहरूको बोलीको भाषामा फरक पाइन्छ । जस्तै :

| | **काठमाडौं** | **भक्तपुर** |
|---|---|---|
| पानीलाई | ल | ना |
| मकैलाई | कनि | लाक्ज्वा |
| जानेलाई | वनेगु | वानेगु |
| आमालाई | मा | अम्मा |
| दाइलाई | दाई | दाइँचा |
| रोटीलाई | मरी | मारी |
| दगुर्नेलाई | व्याय् | ब्वाक् ब्वाक् |
| शहरलाई | यें | देसे |
| बालाई | बा | आम्बो |
| दिदीबहिनी | तता, के | तताचा, के चा |

## ४.२ धार्मिक जीवन

रञ्जितकारहरू सामान्यतया आफूलाई बौद्धमार्गी ठान्दछन् । यिनीहरूको धार्मिक परम्परा, क्रिया, कर्म गर्दा बौद्ध परम्परा बमोजिम गर्ने गरेको पाइन्छ । यिनीहरूले आफूलाई हिन्दू भन्ने लेख्ने गरेको पनि पाइन्छ ।

यिनीहरूले सांस्कृतिक सम्पदाको स्थापना पनि बौद्ध परम्पराअनुसार गर्ने गरेको पाइन्छ । स्थानीय कृष्णमान रञ्जितकारका अनुसार नेवार समुदायभित्र केही वर्ग आफूलाई हिन्दू धर्मका अनुयायीका रूपमा पनि प्रस्तुत गर्ने गरेको पाइन्छ । यस वर्गमा श्रेष्ठ थरका नेवार समुदयाहरू पर्दछन् । यी वर्गका मानिसहरूले बौद्ध धर्मप्रति त्यति आस्था राखेको पाइँदैन भने अन्य नेवार समुदाय आफूलाई बौद्धमार्गीका रूपमा लिए पनि हिन्दू धर्मप्रति उनीहरूको त्यति नै आस्था, लगाव र भक्तिभाव भएको देखिन्छ । यिनीहरू हिन्दू धर्मलाई पनि आफ्नो परम्परागत धर्मका रूपमा मान्ने गर्दछन् । अझ भन्ने हो भने ब्राम्हण, क्षेत्रीले भन्दा बढी नै हिन्दू धर्मलाई मानेको पाइन्छ । नेवार जातिमध्येका रञ्जितकार जातिहरूले दैनिक पूजापाठ गर्दा अधिकांश जसोले हिन्दू धर्मका देवदेवीहरूको पूजा गर्ने गरेको देखिन्छ । सीमित वर्गका बाहेक अन्य बौद्धमार्गी भए तापनि यिनीहरू महादेवको पूजा, आराधना गर्न मन पराएको देखिन्छ । यसैले यिनीहरू बौद्धमार्गी भए पनि हिन्दू धर्ममा आस्था राख्ने वर्गका रूपमा लिन सकिन्छ ।

रञ्जितकार (छिपा) हरू यसै कारण बौद्ध धर्मअनुसार पुरोहित आ-आफ्नो गुरूजुबाट कर्मकाण्ड गर्ने गर्दछन् भने अन्य धार्मिक कार्य जस्तैः सत्यनारायणको पूजा, रूद्री पाठ, चण्डीपाठ, लाखवक्ति बाल्दा बाहुन, पुरोहितद्वारा नै पूजापाठ, अर्चना कार्य गर्ने गर्दछन् । यिनीहरूमा बौद्ध परम्पराअनुसार भिक्षुहरूद्वारा महापरित्राण, परित्राण गराउने र हिन्दू पुरोहितद्वारा सप्ताहा, यज्ञ र महापुराण पाठ गर्नेहरू पनि समन्वयन रूपमा रहेको पाइन्छ ।

## ४.३ संस्कारहरू (जन्मदेखि श्राद्धसम्म)

यस जातिका मानिसहरूले परम्परागत धार्मिक संस्कार र रीतिरिवाजका रूपमा मानिस भै जन्मेदेखि मृत्युसम्म र मृत्युपछि पनि मृतकका नाममा विभिन्न धार्मिक तथा सामाजिक संस्कार गर्दै आइरहेको पाइन्छ । जन्म र मरण प्राकृतिक वास्तविकता हो भने जन्मेपछि बाचुञ्जेल जीवन सफल र अर्थपूर्ण बनाउन यी जातिका मासिनहरू धार्मिक आस्थामा विश्वास गर्दछन् । यसैका निम्ति धार्मिक संस्कारअनुसार परम्परागत रीतिरिवाजहरू मनाउँदै आइरहेका छन् ।

स्थानीय चन्द्रबहादुर रञ्जितकारका अनुसार पुर्खाहरूले आफ्नो जीवनकाल पर्यन्त आफ्नो नाम अमर होस् भन्नको लागि विभिन्न धार्मिक र सामाजिक कार्यहरू स्थापना गरी गएका पाइन्छ । जीवनलाई शुद्ध, परिस्कृत बनाउन अनेकन अवसरहरूको सिर्जना गरेर गएका छन् । यिनै धार्मिक र सामाजिक अवसरहरूलाई आज हामी परम्परागत संस्कारका

रूपमा अवलम्बन गरिआएका छौं । जीवनमा आउने अनेकन खराव तत्वहरूको असर हामीले गर्ने हरेक क्रियाकलापमा नपरोस् भनेर धार्मिक असल गुणहरूको सम्मिश्रण र त्यसलाई अभिवृद्धि गर्न सके मात्र जीवन सुखमय बन्न सक्दछन् त्यसलाई धार्मिक संस्कारहरूले परिपूर्ति गरिरहेका हुन्छन् । मानिसले आफ्नो व्यक्तित्व विकास गरी मरणपछि स्वर्ग भन्ने स्थानमा स्थान पाउनका लागि प्राचीनकालदेखि नै धार्मिक संस्कारहरू मान्दै आएका छन् । यसैका आधारमा रञ्जितकार जातिले आफ्नो परम्परागत अनुसार केही मात्रामा व्यवहारिकता फरक भए तापनि समग्र रूपमा एउटै प्रकृतिका धार्मिक संस्कारहरू गर्दै आएको पाइन्छ । यिनै धार्मिक संस्कार र रीतिरिवाज बारेमा संक्षिप्त व्याख्या गरिनेछ ।

### ४.३.१ जन्म संस्कार

यस जातिका मानिसहरूले परम्परागत धार्मिक संस्कार र रीतिरिवाजका रूपमा मानिस भै जन्मेदखि मृत्युसम्म र मत्युपछि पनि मृतकका नाममा विभिन्न धार्मिक तथा सामाजिक संस्कारहरू गर्दै आइरहेको पाइन्छ । जन्म र मरण प्राकृतिक वास्तविकता हो भने जन्मेपछि बाचुञ्जेल जीवन सफल र अर्थपूर्ण बनाउन यी जातिका मानिसहरू धार्मिक आस्थामा विश्वास गर्दछन् । यसैका निम्ति धार्मिक संस्कार अनुसार परम्परागत रीतिरिवाजहरू मनाउँदै आइरहेका छन् ।

जन्म संस्कारबारे स्थानीय शारदाभक्त रञ्जितकारका अनुसार पुर्खाहरूले आफ्नो जीवनकालमा, जीवनपर्यन्त आफ्नो नाम अमर होस् भन्नाको लागि विभिन्न धार्मिक र सामाजिक कार्यहरू स्थापन गरी गएका छन् । जीवनलाई शुद्ध, परिस्कृत बनाउन अनेक अवसरहरूको सिर्जना गरेर गएका छन् । तिनै धार्मिक र सामाजिक अवसरहरूलाई आज हामी परम्परागत संस्कारका रूपमा अवलम्बन गरी आएका छौं । जीवनमा आउने हरेक खराव तत्वहरूको असर हामीले गर्ने हरेक क्रियाकलापमा नपरोस् भनेर धार्मिक असल गुणहरूको सम्मिश्रण र त्यसलाई अभिवृद्धि गर्न सके मात्र जीवन सुखमय बन्न सक्दछन् । मानिसले आफ्नो व्यक्तित्व विकास गरी मरनपछि स्वर्ग भन्ने स्थानमा ठाउँ पाउनका लागि प्रचीनकालदेखि धार्मिक संस्कारहरू मान्दै आएका छन् । यसैका आधारमा रञ्जितकार जातिले पनि आफ्नो परम्परागत शैलीमा स्थानअनुसार केही मात्रामा व्यववहारिकता फरक भए तापनि समग्रमा एउटै प्रकृतिका धार्मिक संस्कारहरू गर्दै आएको पाइन्छ । यिनै धार्मिक संस्कार र रीतिरिवाजहरूका बारेमा संक्षिप्त व्याख्या गरिएको छ ।

#### (क) धौबजि नकेगु (दहि च्यूरा खुवाउने)

यो संस्कार पनि नेवार जातिहरूले गर्ने संस्कार हो । आफ्नो परिवारमा छोरी, बुहारी र नातिहरू दुई जिउको छ भने आफ्नो संस्कार अनुसार ती चेलीबेटीहरूलाई दुई जिउ भएको नौ महिना पुग्ने बित्तिकै आफ्नो गक्षअनुसारको खानेकुराहरू खुवाउने चलन गर्दै आइरहेको पाइन्छ । यी रञ्जितकार (छिपा) हरूले पनि आफ्नो छोरीलाई नौ महिना पुग्ने

बित्तिकै विशेष गरी आमा, भाउजु, काकी, दिदी, बहिनीहरू गएर दहि चिउरा खुवाउने चलन छ । यसको लागि चाहिने सामग्रीहरूः दही ५ लिटरको एउटा, चिउरा १० माना, यःमह्रि १२५ वटा, उसिनेको अण्डा १२ वटा (परिवार अनुसार थपेर लग्ने चलन पनि छ) पकाएको ६ वटा मासुको परिकार, लाग्वः १५ वटा, लापी १५ वटा, मासको वाडा १५ वटा, सुन्तला ८ वटा, केरा १ दर्जन, रक्सी १ माना, जाँड भए १ माना, छोयला आधि धार्नी, फुकाला आदि खानेकुरा लिएर जान्छन् र छोरी ज्वाईंलाई सँगै राखेर सबै खानेकुराको परिकार दुई/दुई वटा छोरीलाई राखी खुवाउने चलन गर्दै आएको पाइन्छ । अनि अन्य परिवारका सदस्यहरूलाई पनि खुवाउने चलन गर्दै आइरकेको पाइन्छ ।

### (ख) सिचु पालु कनेगु (शिशु जन्मबारे मामाघरमा खवर पठाउने)

नेवारी समाजमा प्रायःजसो जुनसुकै जातमा पनि आ-आफ्ना बुहारीहरूले शिशु जन्माउने बित्तिकै माइतीपट्टि खबर पठाउने चलन रहेको पाइन्छ । त्यसमध्ये रञ्जितकार (छिपा) हरूको पनि यही चलन रहेको पाइन्छ । जसलाई 'सिचु पालु कनेगु" भनिन्छ । जसमा चाहिने सामग्रीहरूमा घ्यू १ पाउ, चाकु १ वटा, इमूचा (ज्वानो) १ पाउ, अदुवा १ पाउ, नुन आधा माना, ल्वाङ्ग १ छटाक जाति राखेर खबर पठाइन्छ भने माइतिपट्टिबाट खवर प्राप्त भएमा पठाएको सामानमा केही थप गरी जानकारी प्राप्त भएको खवर पठाइन्छ ।

### (ग) बच्चा जन्मेपछि हेर्न जाने (मचावु स्वः वनेगु)

नेवारी समाजमा शिशु जन्मेको ४/६ दिनका दिन विहानै नुहाई धुवाई नङ्ग काटी चोखो गरी दिदीबहिनीहरूले पूजा गरी सातवटा पातमा (आंगवोचा) भोज राखी बाँड्ने चलन रहिआएको छ । उक्त अवसरमा १० दिने नाताभित्रका नातेदारहरू र दिदीबहिनीहरूलाई बोलाइ भोजन खुवाउने पनि चलन रहेको छ ।

उक्त अवसरमा माइतीबाट सुत्केरीलाई र बच्चालाई २/२ जोर लुगा, सुकुल १ वटा, बच्चालाई ओछ्यान, सिरक, मचाकथि १ वटा, टुख्वो १ वटा, पानी तताउने कचौरा १ वटा, चाँदीको अजःसला १ वटा (गाजल राख्ने), चाँदीको प्यूचा १ वटा, घोतिचौथी १ वटा, आमालाई भात खान काँसको भाँडा १ वटा, मेथी, बेसार, झिकुचा, अदुवा आदि सामग्री राखी कुमि (भरिया) लाई बोकाएर भोज खुवाउन पठाउनु पर्छ । माइतीपट्टिबाट आएका मान्छेहरूले उक्त अवसरमा छोरीको घरमा केही खान हुँदैन भन्ने पनि चलन रहेको छ ।

### (घ) न्वारान कार्य (मचावू ब्यंकेगु)

यस जातिमा बालक जन्मेपछि बालकलाई न्वारान नगरेसम्म न्वारानको समयमा चोख्याउनको लागि केही समयसम्म आमा र बालकलाई अलग राख्ने प्रचलन पनि देखिन्छ । बालक जन्मेको ४/६ दिनमा चोख्याउने कार्य गरिन्छ । न्वारान नभएसम्मका लागि शिशुलाई स्याहार सुसार गर्न सुडेनी (अजि) राख्ने प्रचलन थियो । २१ औं शताब्दीमा आएर

यस्तो सुडेनी राख्ने चलन हराइसकेको पाइन्छ । बच्चा जन्मेपछि माइतीलाई खवर पठाउने चलन पनि अहिलेसम्म पाइन्छ । जसमा ज्वानो, तेल, चाकु, घ्यु, चिउरा आदि राखेर लिइन्छ भनी स्थानीय नजर कुमारी बताउँछिन् ।

त्यसपछि न्वारनको दिनमा मामाघरबाट समानहरू पठाउने चलन पनि देखिनमा आएको छ । जसमा आमाको लागि २ वटा साडी (तेलमा लगाउने र बाहिर जाने खालको), जुत्ता २ वटा, यसैगरी बच्चालाई पनि कपडाहरू ल्याउने चलन पाइन्छ । भाँडावर्तन पनि राखेर ल्याउने गरिन्छ । भात ख्वाउन काँसको बाता, कचौरा, बच्चालाई जन्मघुटी खान चम्चा, चाँदीको गाजल राख्ने भाँडो (अजसल्ला) साथै बच्चाका लागि ओछ्यान, तोरीको तकिया, सिरक, थाङना आदि कपडाहरू पठाउने गरेको देखिन्छ । साथै औषधिको रूपमा आयुर्वेदिक पाचक, जन्मघुटी साथै खाने कुरामा चिउरा १ पाथी, छोरा बच्चा भए राँगाको सिङ्गो टाउको, छोरी भए आधी, मासु १ धार्नी, ४ थरिको गेडागुडी आधा आधा किलो, चाकु, घ्यु, ज्वानो (इच्छा अनुसार) आलु, तरकारीहरू पठाउने गरेको देखिन्छ । यसरी मामा घरबाट ल्याएको सामानहरू नै उपयोग गर्नुपर्छ भन्ने धारणा अहिलेसम्म पनि रहेको पाइन्छ ।

यसैगरी बच्चा जन्मेको ३ दिनमा बच्चाको सालनाल सहित नाइटो काट्ने गरेको पाइन्छ । यो काट्ने कार्य कसाइहरूले गर्ने चलन रहेको छ । यो कार्य गरेवापत उसलाई दक्षिणा, कपडाहरू दिने पनि गरेको पाइन्छ । नाइटो काटी सकेपछि त्यसको माथि १ सिङ्गो सुपारी राखेर त्यसमाथि एक/दुई थोपा पानी राख्नुपर्छ भन्ने प्रचलन पनि देखिन्छ । त्यसपछि काटेको नाइटोलाई माटोको भिंगुटमा राखेर दोबाटो वा (नेवारीहरूको चलन छ्वासय) राख्न लग्ने प्रथा पनि पाइन्छ । न्वारन नसकेसम्म १० दिने दाइभाइहरू सुतक वार्ने देखिन्छ ।

न्वारनको दिनमा घरमा शुद्ध गर्ने, लुगा धुने, लिपपोत गर्ने सबै घरका १० दिने दाजुभाइले समेत नुहाई शुद्ध गरी गोडाको नङ्ग काट्ने कपाली (नौचा) लाई बोलाएर काट्ने चलन पनि छ । त्यसदिन विहान बच्चा र आमाले पनि नुहाई शुद्ध कपडाहरू लगाई सकेपछि भोज बनाई पूजाआजा गरिन्छ । अजी आएर उक्त पूजा गर्ने आग वो (सातवटा पातमा खानेकुरा) चिउरा, आलु, साग, केराउ, बाडा आदि राखिन्छ ।

त्यसदिन बुबाको काखमा बच्चालाई राखेर उसको न्वारन नाम नामकरण गरी बच्चा सुम्पिदिने चलन रहिआएको देखिन्छ । अजिलाई खुशी तुल्याउनु अत्यन्त आवश्यक मानिन्छ किनकि अजि सन्तुष्ट भएन भन्ने बच्चा रूने विरामी हुन्छ भन्ने विश्वास भएकोले अजिलाई सकेसम्म राम्रो दक्षिणा दिई खुशी पारी विदा गर्ने चलन पनि देखिन आएको छ । त्यसपछि १० दिन फुकीहरू र दिदी, छोरीबेटीहरूलाई बोलाएर भोज खुवाउने गरिन्छ । त्यसदिनदेखि चोखो भएको भनि भन्ने गरिन्छ । न्वारान सकेपछि माइतीले छोरीको स्याहार सुसारको लागि सकभर छिटो लैजाने गरेको देखिन्छ । इच्छाअनुसार माइत बस्ने तर बढीमा एक महिनासम्म बसेर आउने चलन यद्यपि छँदैछ ।

### (ङ)	पास्नी वा अन्नप्रासन (मचा जंको यायेगु)

रञ्जितकार (छिपा) हरूले पनि अन्य जातिले जस्तै आफ्नै शैली, परम्परा बमोजिम बच्चाको सु-स्वास्थ्य दीर्घायुको कामनाको लागि बच्चालाई अन्नप्रासन कार्य गर्दछन् । यसको लागि छोरा भए ६ महिनामा र छोरी भए ५ महिनामा अन्न खुवाउने (जा-नकेगु) अर्थात् अन्नप्रासन गराउने गरिन्छ । अन्नप्रासन गराउनुको मुख्य उद्देश्य भनेको बच्चाको महिनाअनुसार उसलाई विभिन्न तत्वको आवश्यकता हुने भएको वा आमाको दुधले मात्र नपुग्ने भएकोले अन्न साइत जुराएपछि खुवाउने गरिन्छ । यस्तो कार्य पुरोहित (गुभाज्यू निकाल्ने चलन छ । शुभ साइतमा अन्नप्रासन घरको जेठोदेखि शुरू गरिन्छ र असर्फी वा चाँदीको चम्चाले खुवाउने चलन पनि देखिएको पाइन्छ । अण्डा, माछा दिई टिका लगाई सगुन दिने पनि गरिन्छ । यो मामा घरबाट ल्याउने चलन रहिआएको पाइन्छ । माइतबाट आएका पहिला मामाबाट सुरू गरिन्छ र सोही अनुसार खुवाउने गरिन्छ ।

अधिकांश रञ्जितकार (नेवार जाति) हरूले पास्नीमा नामकरण गर्ने भएकोले पास्नी अगाडि नै चिनो बनाएर चिनोको नामबाट पनि साइत निकाली अन्नप्रासन गराउने गरिन्छ ।

स्थानीय शंकरमान रञ्जितकारका अनुसार शुभ पास्नी गर्नु एकदिन अघि घर शुद्ध गरी लिपपोत गरी शुद्ध गरिन्छ । यस दिन शिशुलाई पूर्वतर्फ फर्काई स्वस्तिक चिन्ह लेखी कलश र त्यसमाथि पञ्चामृत राखी पूजापाठ गरिने चलन रहिआएको छ । पूजा विधिअनुसार कलश भन्दा बायाँपट्टि पात्रहरूमा सगुन र दायाँपट्टि श्री गणेश अंकित सुकुन्दा राखी गुरू गणेशको प्रतिनिधित्व गराइन्छ । गणेश भगवानबाट पूजाको थालनी गरी थाय्भू (ठूलो ८४ व्यञ्जन अट्ने काँसको थाल) मा ८४ व्यञ्जन खानेकुराहरू पकाएर (जमिनबाट जतिसकदा उम्रने चिजहरू) राखिएको हुन्छ । त्यस थाय्भूमा राखिएका विभिन्न प्रकारका खानेकुराहरूमा दुध बाहेक अन्य खुवाइने गरिन्छ । यसरी शुभ-साइतमा अन्नप्राशन गराएमा बच्चाको स्वास्थ्य राम्रो, भाग्यमानी हुने जनधारणा पाइन्छ । यस दिनदेखि बच्चालाई आमाको दुधको अलावा ठोस पदार्थहरूको सेवन गराइने चलन छ । बच्चाले जुन वस्तुमा स्पर्श गर्छ बच्चा पछि गएर सोही बाटोमा लाग्ने विश्वास गरिन्छ । बालक भविष्यमा के बन्ला, के हुने सम्भावना राख्छ भन्नका लागि सरस्वतीको प्रतिकका रूपमा कलम, कापी, पुस्तक, सुन, चाँदी, ईंटा, माटो आदि बालकको सामुन्ने राखिन्छ र बालकले जुन वस्तुमा पहिले हात लगाई स्पर्श गर्छ पछि गएर उ त्यसै बाटोमा अगाडि बढ्छ भन्ने जनविश्वास रहेको छ जुन अहिलेसम्म पनि चल्दै आइरहेको पाइन्छ । अन्नप्रासन गराउँदा यस जातिमा बच्चाको स्वास्थ्य, दीर्घायूको कामना र स्पष्ट बोलीका लागि खसी, बोका, तित्राको मासु, माछा, शुद्ध घ्यूमा भोजन बनाएर एकदम चोखो बनाएर खुवाउनु पर्छ भन्ने पनि अवधारणा रहेको पाइन्छ ।

साथै यस खुशियालीमा आफ्नो गक्षेअनुसारको भोजभतेर गर्ने चलन पनि रहिआएको देखिन्छ । जसमा माइतीपट्टिका आफ्ना दाजुभाइ, मामा, फूपुहरूको विशेष भूमिका रहेको पाइन्छ । र अरू इष्टमित्रहरूलाई पनि यस खुशियालीमा भोज खुवाउने गरिन्छ ।

सबभन्दा पहिला मामा र फुपुले खुवाउने त्यसपछि जेष्ठताको आधारमा खुवाउने चलन छ । प्राय:जसो असर्फी नभए चाँदीको चम्चा वा कुनै पैसाको ठ्याकबाट खावउने चलन पाइन्छ । आफ्नो गक्षअनुसार बच्चालाई पैसा वा कुनै उपहार दिने गरेको देखिन आएको पाइन्छ ।

**(च) योःमऱ्ही क्वखायेकेगु (२ वर्षमा गर्ने कार्य)**

बच्चा दुई वर्षको भएपछि योःमऱ्ही लगाइदिने चलन पनि रहेको छ । यसको लागि योःमऱ्ही २ वटा र लोहँचा मऱ्ही २ वटा लगाई दिने गरिन्छ । यस अवसरमा मामाघरलाई १०८ वटा योःमऱ्ही र दिदीबहिनीहरूलाई १२/१२ वटा दिइ पठाउने चलन रहेको छ । उक्त अवसरमा मामाघर तथा दिदीबहिनीहरूबाट बच्चालाई विभिन्न उपहार पठाउने पनि गरिन्छ ।

**(छ) वुसँ खा (कपाल काट्ने)**

बच्चा जन्मेको (छोरा) ७/८ वर्षपछि मामाले चाँदीको (खोचां) चकुले कपाल काटेको जस्तो गरी दिएपछि मात्र सबै कपाल काट्ने गरिन्छ । फुपुले काटेको कपाल थाप्ने र मुलीले सगुन दिएर उक्त कार्य सम्पन्न गरिन्छ । यस अवसरमा पनि मामाघरबाट परिवार संख्या हेरेर सगुन पठाउनु पर्छ जसमा रक्सी १ माना, दही ५ किलो जति, पूजा सामान र फुपुलाई एउटा लुगा र बच्चालाई पनि लुगा पठाउने गरिन्छ ।

**(ज) कयूता पूजा (ब्रतवन्ध)**

रञ्जितकार समाजका मानिसहरूले ब्रतवन्ध गर्ने गराउने कार्यलाई कर्मकाण्डका रूपमा लिने गर्दछ । धर्मअनुसार ब्रतवन्ध नगरेको बालकको कर्म खुल्दैन, कर्म नखुलेको बालकबाट अरू शुभ कार्य पनि गराउनु हुँदैन भन्ने धारणा रहने भएकाले ब्रतवन्ध गर्ने चलन रहिआएको छ । ब्रतवन्ध गर्ने काम सबै नेपालीहरूले आ-आफ्नो परम्पराअनुसार गर्ने गर्दछ । ब्रतवन्ध विनाको कोही मानिसको मृत्यु भएमा त्यसको कुनै काजक्रिया समेत गर्नुपर्दैन । त्यसैले पनि रञ्जितकारहरूले आफ्नो गच्छेअनुसार ब्रतवन्ध गर्ने चलन रहिआएको छ ।

ब्रतवन्ध गर्दा बालकको उमेर साधारणतया ७ देखि १४ वर्षभित्र हुनुपर्ने, सकेसम्म जोड अंकको उमेरमा ब्रतवन्ध गरिँदैन । ज्योतिषिले दिएको शुभ मुहुर्तमा यो कार्य गरिन्छ । ब्रतवन्ध गर्ने बेलामा बालकलाई सुविधा अनुसारको ठाउँमा राखी पूजा गरी रञ्जितकार जातिले हिन्दू संस्कारलाई समेत समेटेर बौद्ध परम्पराअनुसार बज्रचार्य गुरूजुद्वारा गरिन्छ ।

गुभाजुद्वारा घरको चोक, आँगनमा यज्ञशाला मण्डप बनाई ज्वाला न्हाय्‌क सिन्हमू र गणेशको प्रतिक सुकुण्डा राखेर पूजा गरिन्छ । यसपछि चोख्याएको ठाउँमा विभिन्न देवदेवीहरूको आसनको लागि धान चामलको थुप्रो बनाई विभिन्न कुलदेवीहरू जस्तैः भैरव, भद्रकाली, अजिमा तथा अर्को थुप्रोमा श्री गणेश, लक्ष्मी, कुलदेवता एवं अस्तमातृकाको प्रतिमा राखी पूजाआजा गरिन्छ । यसरी प्रतिमा पूजा गर्दा नेवारी चलन अनुसार समयवजी, मासु, रक्सी आदि चढाउने चलन छ ।

स्थानीय गोविन्द रञ्जितकारका अनुसार गुभाजुद्वारा थकालीको माध्यमले श्री गणेशको रूपमा राखिएको सुकुण्डाको पूजा गरी पूजाको शुरूवात गरिन्छ । बालकलाई यज्ञशाला ल्याई पूर्वतिर मुख गराई गुभाजुको बायाँपट्टि आसनमा बसालिन्छ । थकालीले बालकको पाउ पूजा गरी पीपल, विमिरो, आँप (अँ), एवं बरको माला लगाई दिन्छ । यस प्रकारको पूजा विधिपछि बालकको मामा र फुपुको यहाँनेर ठूलो महत्व र भूमिका रहेको हुन्छ । ब्रतबन्ध गर्नु अघिसम्मको बालक अवस्थामा भए गरेका सम्पूर्ण दोष अवशेषका रूपमा पनि नरहोस भन्नाका लागि मामाले सुन र चाँदीको चक्कुले बालकको कपाल खौरने गर्छ त्यसपछि नाउले कपाल खौरी दिने कम गर्दछन् । यसरी खौरेको कपाल फुपुहरूले थाप्ने गर्छन् । नाईद्वारा कपाल खौरी सकेपछि थकालीले पाथी लुइगु गरिन्छ । त्यसपछि गुरूजुबाट टिका लगाई दिन्छ । बालकको काटिएको कपाल भुइँमा झर्न नपाओस् भनेर फुपुहरूले थालमा थाप्ने गरिन्छ । यसरी कपाल थाप्दा फुपुहरूलाई दक्षिणा स्वरूप गच्छेअनुसार साडी वा कपडा वा नगद राखी दिने चलन छ । खौरिएको कपाल फुपुहरूले नदीमा लगेर फालिन्छ । ब्रतवन्धको पूजा-विधि सकी मामाले फलफूल, चामल र केही पैसा भिक्षादान दिई बालकलाई आगामी जीवन कसरी जिउन सकिन्छ, मातापितालाई कसरी आदर गर्नुपर्छ, मान्यजनको सम्मान कसरी गरिन्छ ? जीवन कसरी सफल हुन्छ भन्ने ज्ञान लिन र सिक्नका लागि जसरी रामायणका रामले १४ वर्ष बनवास बसे त्यसरी नै घर गृहस्थ छोडी वनवास गएर आउ भनी नजिकको गणेश मन्दिरमा लगी श्री गणेश साक्षी गुभाजुद्वारा कोरिएको सात सीमा रेखा पार गराई बनवास पठाउने गरिन्छ । कर्मकाण्ड पछि बालक बनवास गई घर फर्केको खुशीयालीमा आफन्त, नाता कुटुम्व, साथी भाइलाई भोज खुवाउने गरिन्छ ।

### (छ) 'इहि' वेल विवाह

रञ्जिकार समाज बालिकाहरूलाई इही गर्ने परम्परा छ । ईही अर्थात् बेलविवाह बालिकाहरूलाई चारदेखि एघार वर्षको उमेरमा यो संस्कार गर्ने चलन रञ्जितकार समाजभित्र रहेको पाइन्छ । १२-१३ वर्षको उमेर पुगेपछि बालिकाहरू प्राकृतिक रूपले नै महिनावारी हुनसक्ने भएकाले १२-१३ वर्षको उमेरमा नै यो संस्कार गर्ने गरिन्छ । यस कार्यलाई धार्मिक मान्यताअनुसार सुवर्णकुमारसँग बालिकालाई विवाह गरिदिने पनि भनिन्छ । यसरी सुवर्णकुमारसँग बेलविवाह गराउँदा हिन्दू परम्पराअनुसार भगवान नारायणका सुनौलो

प्रतिमूर्ति राखी गरिन्छ । वेल विवाह गराउँदा पवित्र मनले भक्तिपूर्वक धार्मिक विधिविधान अनुरूप गर्नुपर्दछ । सम्पूर्ण लोकले पूजिने नारायण भगवानसँग यसरी वेलविवाह 'इहि' भएपछि पछि कुनै प्रकारले लोग्नेको मृत्यु भएमा विधवा भै बस्नु नपर्ने र केटीले चाहेमा पुनः विवाह गर्न सक्ने धार्मिक कथन रहेको छ । पहिला पहिला साहु महाजनहरूले आफ्नै घरमा 'इहि' को आयोजना गरी आफ्नै छोरी, नातिनीहरूलाई कजि (थाकुली) बनाउने र जोडी कन्याहरू जस्तैः १२, १६, १८ जनालाई सँगै राखेर इहिको आयोजना गरेको पाइन्छ । साथै आजकल इहि गर्नुको सट्टा बुद्ध विहारमा गुरूआमा कहाँ लगी ८ दिनसम्म विद्या अध्ययन गराउने चलन पनि गर्दै आएको देखिन्छ ।

'इहि' अर्थात् वेलविवाह गराउँदा अलि खर्चिलो हुने भएकोले प्रायः यो कार्य सामुहिक रूपमा गर्ने गरिन्छ । सामुहिक रूपमा 'इहि'को आयोजना गर्दा कम खर्चिलो र सजिलो पनि हुने भएकाले सकेसम्म धेरै बालिकाहरूलाई सम्मिलित गराइन्छ । यो 'इहि' आयोजना गर्दा आयोजकले सम्मिलित सबै बालिकाहरूलाई आफ्नो गच्छेअनुसार चोलो कपडा दिने गर्दछ । साथै सबैलाई भोज पनि खुवाइन्छ । ईही गर्नुपर्ने चलनअनुसार इहि गर्ने स्थानमा सफासुग्घर गरी लिपपोत गरी शुद्ध गरिन्छ । उक्त दिन केटी बच्चाहरूलाई केही पनि नखुवाएर ब्रत राखी धार्मिक परम्पराअनुसार इहि गर्दा श्री गणेशलाई बोक वा हाँसको बलि पनि दिने चलन रहिआएको छ । यो कार्य आयोजकले नै गर्छन् तर बौद्धमार्गी भएमा यस्तो बलि दिने काम गरिँदैन ।

यसरी वलि दिइएको बोका वा हाँसको आन्द्राले खड्कुलोलाई बेरी आठ स्थान विभिन्न पिठ देवीहरूको झण्डा ध्वजा राखी नदीमा फ्याक्न लगिन्छ । आयोजक घरका थकालीबाट राती श्राद्ध गरी पुर्खाहरूलाई फूल नैवेध चढाइन्छ । नदी श्राद्धपछि केटी बालिकालाई लसकुश गरी घरमा स्वागत गरिन्छ । त्यसपछि सतवृन्दको पूजा सम्पन्न गरिन्छ । सत वृन्द भन्नाले पहेंलो धागोले बालिकाको उचाई १०८ पटक नापेर त्यसलाई गोली बनाएर केटी बच्चीकी सामुन्ने राख्नु हो ।

विधिअनुसार कार्यक्रम थकाली पनि हुने याठीं लुइगु भनी ८ माना अट्ने मानो (१ पाथी) मा धान चामल राखेर त्यसले बालिकालाई खन्याएर पहेंलो धागोको गोली (डल्लो) काखमा राखी दिन्छ । त्यसपछि फूल र अक्षताले पूजा गरिन्छ । यो विधिको महत्वपूर्ण पक्ष भनेको ८४ व्यञ्जन (परिकार) खानेकुरा राखिएको थालीको खाना भोजन गर्नुभन्दा अगाडि केटीले देवताहरूलाई चढाएर हातको कान्छी औंलाले सो भोजन च्यापेर खानु । यस दिनलाई नेपाल भाषामा 'घुसः' भनिन्छ । यसको भोलिपल्ट अर्थात् पूर्णिमाको दिन सिन्दुर लगाउने प्रमुख कार्य गरिन्छ । विवाह गर्दा दुलाहाले दुलहीलाई लगाई दिने सिन्दुर पनि यसैको आधारमा लगाउने प्रचलन रहिआएको छ । यसपछि इहि गरेको ठाउँको ३ पल्ट परिक्रममा गरेर चिउरा, दही, फलफूल हातमा लिई खाएको नक्कल गरी फ्याँक्ने गरिन्छ । अन्त्यमा इहि गर्ने बालिकाको बुबा वा दाजुले सुवर्ण कुमारलाई आफ्नी छोरी कन्यादान दिएको घोषणा

गरिन्छ । यस प्रकारको महत्वपूर्ण काम सम्पन्न भएपश्चात थकालीनीले बच्चालाई सिन्हमू र ज्वलान्हायक देखाई घरभित्र लगि सगुन दिने चलन छ । यस खुशियालीमा इष्टमित्र, दाजुभाइहरूलाई भोज खुवाउने गरिन्छ ।

**(ज) बाह्रा (गुफा) राख्ने**

नेवारी परम्पराअनुसार बालिकालाई 'इहि' गरिसकेपछि बाह्रा 'गुफा' राख्ने चलन छ । यो संस्कार हरेक बालिकालहरूलाई इहि गराइ सकेपछि ११-१४ वर्षको उमेरमा बाह्रा गुफा राख्ने गरिन्छ । बाह्रा अर्थात् गुफा राख्ने भनेको बालिकालाई घाम सूर्यको किरण नपस्ने गरी अँध्यारो कोठामा लोग्ने मानिसको अनुहार नदेख्ने गरी १२ दिनसम्म ध्यानमा राखिन्छ । यो गुफा राख्ने काम दुई प्रकारले सम्पन्न गर्ने गरिन्छ ।

(क) बुझ्ने भएपछि बालिका स्वयम नछुने हुनु पूर्व अदृश्य भई बस्ने ।

(ख) आमा बाबुले साइत हेरेर राख्ने ।

**गुफा कसरी राखिन्छ ?**

अँध्यारो कोठमा जहाँ बच्चालाई गुफा राखिन्छ त्यस कोठामा कपासको पुत्ला ख्याकको प्रतिक अर्थात् बाह्राख्या बनाएर बालिकालाई गुफा राख्ने चलन छ । १२ दिनसम्म पुत्लालाई पूजा गर्ने गरिन्छ । यस पुत्लालाई गुफामा बस्ने केटीहरूले आफूले खाना खानु पूर्व पुत्लालाई चढाउने गर्छन् । गुफामा बस्ने बालिका केटीले ११ दिनसम्म माछा, मासु, अण्डा आदि खानु हुँदैन । गुफा राखेको ४ वा ६ दिनसम्म नुन ख्वाइँदैन र ४ वा ६ दिनपछि बालिकाहरूलाई कों चिंक सायकेगु (नुन खान दिने) कार्य गरिन्छ । त्यस बेलामा बाह्रा राख्ने केटीहरूको मामा घरबाट र फुपुहरूले फलफूल, मकै, भटमास र अन्य गेडागुडी आदि खुवाउने गरिन्छ । गुफा राखेको बाह्रौ दिनमा केटीहरूलाई नुहाई धुवाई गराई चोख्याएर सिंगार पटार गरेर टाउको छोप्न लगाएर अँध्यारो कोठाबाट बाहिर निकालिन्छ र सूर्य दर्शन गराइन्छ । यो कार्यलाई सूर्य दर्शन गराउने भनिन्छ ।

घरको थकालीनीले त्यस वखत श्री गणेश, कुमारी सूर्य एवं आफ्नो कुलदेवताको पूजा गर्ने र बाह्रा राख्ने केटीद्वारा पनि पूजा गर्न लगाई निजको घुम्टो हटाएर सूर्य दर्शन गराइन्छ । साथै निज बालिकालाई थकालीनीबाट सिन्दुर लगाइन्छ । त्यसपछि घरबाट र आफन्तहरूबाट धान, चामल, लत्ताकपडा राखी बाह्रा छुइगु कार्य गरिन्छ । बाह्रा राखेपछि केटीहरू वास्तवमा विवाह योग्य भएको मानिन्छ । यसरी बाह्रा राखेको बेलामा केटीहरू तिनै कोठामा मृत्यु भएमा निजलाई त्यस कोठाबाट बाहिर नल्याई कोठाको कुनै भागमा प्वाल पारेर बाहिर ल्याई घरको छिँडीमा गाड्नु पर्छ भन्ने जनश्रुति पाइन्छ । तर यस्तो घटना इतिहासमा विरलै पाइन्छ । यस प्रकार बाह्रा राखी गुफा निकालेको १२ दिनमा आफ्नो गच्छे अनुसार आफन्त र साथी भाइलाई भोज खुवाइन्छ ।

### ४.३.२ विवाह संस्कार

विवाह बन्धमा बाँधिनु जीवनलाई सास्वतरूपमा परिस्कृत गर्नु हो । नेवार जाति र विशेष गरी रञ्जितकार जातिको विवाह एक महत्वपूर्ण संस्कारको हो र यसलाई मोक्ष प्राप्तिको लागि स्वर्गको द्वार खोल्ने र परलोक जाने सत्मार्गका रूपमा लिने गर्दछन् ।

रञ्जितकारहरूले वैवाहिक संस्कारलाई एउटा विशिष्ट परिम्पराका रूपमा लिने गर्दछ । विवाह गर्न लायक केटाकेटी भएमा केटाका पक्षबाट एउटा लमिमार्फत केटी पक्ष कहाँ कुरा मिलाउन लगाइन्छ । लमिद्वारा प्रस्तावित केटाको विषयमा कुरा मिलेपछि वा केटा र केटी दुबैले मन्जुरी जनाएमा विवाहको लागि पक्का पक्की गर्न लाखामरी सहितको सुपारी केटी पक्षलाई दिई विवाहको सम्बन्ध निर्धारण अर्थात् पक्कापक्की गरिन्छ ।

सुपारी दिइसकेपछि साइत निकालेर विवाहको लागि केटाको तर्फबाट जन्तीसहित लिन आउँछ । नेवार समुदायमा कसैकसैको जन्ती जाँदा केटा नजाने जाति पनि हुन्छ । तर रञ्जितकारहरूमा स्वयं केटा नै केटी लिन जाने चलन छ । विवाह एक प्रकारले खुशियाली ल्याउने प्रहरका रूपमा लिन सकिन्छ । जन्ती जाँदा जन्तीको लागि बोलाइएका इष्टमित्र, दाजुभाइ, दिदीबहिनीलाई खाजा खुवाउने चलन छ । जन्तीमा आमन्त्रित नातेदारहरूले दुलहीलाई वैवाहिक सम्बन्ध सफल होस भनी शुभकामना दिनुका साथै उपहारहरू पनि दिने गरिन्छ । पहिले पहिले यातायातको सुविधा नभएका वखत दुलहीलाई 'डु' अर्थात् डोलीमा राखी ल्याइन्थ्यो भने आजभोलि मोटरकारमा राखी ल्याइन्छ । दुलहीलाई गाडीमा तीनपटक परिक्रमा गराई राखिसकेपछि केटा पक्षका थाकुली व्यक्तिले मोटर अथवा डोलीको माथि 'दुफागा' (तासको कपडा) राखी सकेपछि बेहुली अन्माउने गरिन्छ । त्यसपछि दोबाटो अथवा मन्दिरको अगाडि बसी केटी पक्षका अभिभावक र केटा पक्षका अभिभावक बीच सामान्य कुराकानी हुन्छ । त्यसरी कुराकानीमा केटी पक्षले "आज उप्रान्त मेरी छोरीलाई भगवान साक्षी राखी तपाईंहरूको जिम्मा दिएको छु । छोरीलाई अन्याय नगर्नु होला । छोरी नाबालक नै छिन् उनले सानो तिनो गल्ती गरे पनि माफ गर्नु होला । छोरीलाई पाले पुण्य नपाले लाख" भनी भावपूर्ण अभिव्यक्ति गर्ने गरिन्छ । यसरी नै केटा पक्षले पनि "अब उप्रान्त तपाईकी छोरी हाम्रो पनि छोरी नै हुन् कुनै चिन्ता लिनु पर्दैन" भन्ने भरोसा प्रदान गरिन्छ ।

यसपछि केटा र केटी दुबैलाई कुनै मन्दिर वा देवताको सम्मुख अथवा श्री गणेशको प्रतिमूर्ति सुकुन्दा राखी गूभाजुद्वारा पूजापाठ गराई स्वयम्वर गर्ने, गराउने गरिन्छ । यसपछि दुलही केटाको घरमा पुगेपछि गूभाजु पुरोहितले पूजापाठ गरिन्छ र थकालीनीले दुलहीको हात समाएर घर भित्र्याइन्छ । त्यसपछि कुलदेवता तथा देवदेवीलाई सुपारी आदि चढाएर "साइत" स्वयम्वर गर्ने गरिन्छ । यस खुशियालीमा आफ्नो आर्थिक अवस्थालाई प्राथमिकता दिई गच्छेअनुसार नातेदार, इष्टमित्र, शुभेच्छुकलाई भोज खुवाइन्छ । भोलिपल्ट (वंजला वनेगु) गणेश स्थानमा गई दुलहीसहित घरपरिवारका केही सदस्यहरू "पकना" पूजा गर्न जाने चलन रहिआएको छ ।

### ४.३.३ 'जन्को' अर्थात् बुढापास्नी प्रथा

नेवार समुदायका अन्य जातिले जस्तै रञ्जितकार जातिले पनि आफ्ना वृद्ध बा-आमाको जन्को बुढापास्नी गर्ने चलन छ । घरका जेष्ठ आमा-बा, बाज्या-बज्यैहरू यदि उमेरमा ७७ वर्ष ७ महिना ७ दिन ७ घडी ७ पला पुग्ने अवस्था भएमा शुभ साइत निकालेर ति बुढाबुढीहरूलाई 'जन्को' बुढापास्नी गर्ने गरिन्छ । अर्को शब्दमा यसलाई भीमरोथारोहण गर्ने भनिन्छ । यसरी बुढापास्नी गरेपछि ति बुढाबुढीहरूले आफूलाई ईश्वरत्व प्राप्त भएको संकेत गर्दै घरगृहस्थी कार्यबाट पार पाएको थान्दछन् । यसरी जन्को भएका व्यक्ति वृद्धहरूबाट आर्शीवाद प्राप्त गर्न परिवारका सदस्यहरू उत्सुक हुन्छन् ।

बुढापास्नी जन्को उमेरको ख्याल राखी आर्थिक अवस्था राम्रो भएका परिवारहरूले तीनपटकसम्म गर्ने गर्छन् । पहिलोपटक बुढा जन्को ७७ वर्षको उमेरमा गरिन्छ भने दोस्रो जन्को ८४ वर्ष ४ महिना ४ दिन ४ घडी ४ पला पुगेपछि गरिन्छ । यस दोस्रो जन्कोलाई अश्वरोथारोहण गर्ने भनिन्छ । ८४ वर्षको उमेरमा बुढाबुढीले हजार चन्द्र दर्शन गरिसकेको धारणा राखी यसपटक सहस्र चन्द्र दर्शन गराउने गरिन्छ ।

यसै गरी बुढाबुढीहरू बाँचिरहेमा पुनः तेस्रोपटक ९९ वर्ष ९ महिना ९ दिन ९ घडी ९ पलामा बुढा जन्को गरिन्छ । यसपटकको जन्कोलाई स्वर्गरोथारोहण गर्ने भनिन्छ । ९९ वर्ष पुगेका व्यक्तिलाई स्वर्ग प्रवेशका लागि बाटो खुलाउने उद्देश्यका साथ उक्त व्यक्तिलाई तेस्रो जन्को गरिन्छ । यसरी बुढा जन्को गर्ने बेलामा यदि बुढाको श्रीमती पनि रहिछन् भने उनीको उमेर जतिसुकै भए पनि बुढासँगै जन्को गरिन्छ ।

**जन्को विधि**

(क) यज्ञ गर्न स्थानको चयन गरिन्छ ।
(ख) जन्को गर्नेले स्नान गरी चोखोपूर्वक जन्को नसकुञ्जेल निराहार बस्नु पर्ने ।
(ग) जन्को गर्नेलाई पुरोहितको दायाँपट्टि आसन गराउनु पर्ने ।
(घ) सुकुल, कुचो, छाला र खराउ राख्नु पर्ने ।
(ङ) जन्को गर्नेलाई योथरीको माला लगाउनु पर्ने ।
(च) पुरोहित लगायत सबैले फलफूल, अक्षता, अविरले पूजा गर्नुपर्ने ।
(छ) यसपछि नाति नातिनीले बुढाबुढीलाई वासलाया (बाटोमा सेतो कपडा ओछ्याउँदै) गरी रथमा राखी गणेश स्थानमा लानु पर्ने ।

**जन्को गर्नुको महत्व**

(क) धार्मिक संस्कारको संरक्षण ।
(ख) वृद्धवृद्धाप्रति छोराछोरीको कर्तव्य र सम्मान ।
(ग) नातागोताहरूसँगको मेलमिलाप तथा एकता ।
(घ) जीवनलाई मोक्ष प्राप्तिको चाहना ।

### ४.३.४ मृत्यु संस्कार

मानिस जन्मेपछि मर्नु पर्छ त्यो कटु सत्य हो, यसलाई कसैले पनि अपवादका रूपमा लिन सकिन्न । यति मात्र हुन् कि कोही उमेर पुगेर मर्छन त कोही उमेर नपुगी । कोही कालगतिले मर्छन् त कोही अकालमा । मृत्यु सबैका लागि साश्वत सत्यरूप नै हो । मानिसहरूले मृत्युलाई धार्मिक दृष्टिले पनि लिने गर्दछन् । मानिसहरू जीवनमा धर्म, कर्म गरे अनन्तलोकमा स्वर्गीय आनन्दपूर्वक बस्न पाउने र पाप गरे नपाउने विश्वास गरी बाचुञ्जेल दानधर्म, पूजापाठ गरी विभिन्न देवदेवीको आराधना गर्छन । मृत्युपछि स्वर्गमा गई आनन्दले बस्नका लागि भनेर दान, गोदान, यज्ञ यज्ञादि गर्ने गर्छन् । उमेर पुगेर मृत्यु भएका बुढाबुढीको मृत्यु भएमा उनीहरूको मृत्यु कालगतिले भनिन्छ । घटना, दुर्घटना इत्यादि भई मृत्यु भएमा अगती भई मरेको भन्ने गरिन्छ । मानिसहरू अगती भई मरेमा त्यस्ताको आत्मा भूतप्रेत भई पृथ्वी लोकमा नै घुमिरहन्छ भन्ने जनधारणा पाइन्छ । बुढापाकाको भनाइमा नाक, कान, र आँखाबाट प्राण गएमा सद्गति प्राप्त हुन्छ भन्ने भनिन्छ ।

नेपालीहरूको समाजमा मानिसको मृत्यु हुन लागेको अवस्थामा प्राण त्याग गर्न लागेका व्यक्तिलाई मृत्युपछि दागबत्ती दिने मानिसले तामाको बाटामा मृत्यु हुने व्यक्तिको मनपर्ने व्यक्तिको खुट्टा राखी चाँदीको सिक्काले पानी खुवाउनु पर्छ भन्ने प्रचलन पनि रहिआएको छ तर रञ्जितकार समाजमा यस्तो तामाको ढालमा खुट्टा राखी पानी खुवाउने प्रचलन छैन । रञ्जितकार जातिमा मानिस मरेपछि निजले सेतो कपडा अथवा खाष्टोले शिरदेखि खुट्टासम्म छोप्ने गरिन्छ । यसरी छोपेपछि शिर र पाइताल मुनि माटो वा तामाको पालामा तेल हाली बत्ती बालिन्छ यो बत्ती अन्यस्तीको लागि शवयात्रा शुरू नभएसम्म बालिन्छ । रञ्जितकारहरूको प्रायः मृत्यु संस्कारको लागि सानो वा ठूलो मृत्यु संस्कार गुठी हुन्छ । गुठी भएका मानिसहरू मृत्यु भएमा सम्पूर्ण शवयात्राको बन्दोवस्त त्यस गुठीले नै गर्दछ । मृत्यु संस्कारका लागि खोलिएका यस्ता गुठीलाई सनागुठी अर्थात् सी गुठी भन्ने गरिन्छ । कोही मानिस मरेमा घरका मानिसहरूले गुठीलाई सूचना गर्नुपर्दछ । सूचना गरेपछि गुठीका गुठियारहरू आई सम्पूर्ण कार्य गरिन्छ । शवयात्राको लागि चाहिने सम्पूर्ण सामग्रीहरू पनि प्रायःजसो गुठीले नै बन्दोवस्त गरिदिएका हुन्छन् । यसका लागि गुठीमा एउटा कोष नै राखिएको हुन्छ ।

मृतकको शवयात्राको लागि गुठीले आवश्यक कोता बनाउने आगो बालेर आगोको भुस राख्न माटोको भाँडो र जुटको बोराको खर्पन बनाउनेदेखि चौबाटोमा छ्वासे वायगु काममा समेत सहयोग गर्छन् । मृतकको नजिकको व्यक्तिले 'फाँगा' (सिरक) ओढाउने कार्य गराई दुखौं पिखा तिइकेगु कार्य गरी पुर्खालाई बाँसको खटमा राखी जलाउनका लागि दीपतिर लगिन्छ । यसरी मृतकलाई दीपतिर लगेपछि दागबत्ती दिने मुख्य व्यक्तिको पछिपछि अन्य दाजुभाइ पनि लस्करमा जान्छन् । यसभन्दा अगाडि छोरीहरूले धान र पैसा दीपसम्म छर्केर जान्छन् । रञ्जितकारहरूको चाहि बाजा बजाउने प्रचलन छैन । लाससँगै रोएर जाने

दाजुभाइहरू लास लगाएर नदीबाट घरमा फर्केपछि घरको मूल ढोका अगाडि बसी "वलि पिइगु" भनेर नून, चिउरा, अदुवा आदि हातमा लिएर खाएको वहाना गरी घरभित्र भित्रिने गर्छन् ।

यसरी दाहसंस्कारपछि घर फर्किएकाहरूलाई सोही दिन दिदीबहिनी, छोरीबेटीहरूले चिपं थिइकेगु (जुठो वार्ने) भनेर चिउरा, नून, मिठाई, मुला आदि लिएर आउँछन् । त्यसै गरी आफन्तहरू विचा हायकेगु (शोकाकुल परिवारलाई सान्त्वना दिन) भनेर आउने गर्दछन् । रञ्जितकार जातिमा ठूलो मानिस मर्दा १२ दिन र सानो मर्दा ४ दिन जुठो वार्ने चलन छ । ४ दिनमा लोचा, ७ दिनमा न्ह्यनुमा (७ दिनको दिनमा मुल ढोकामा पितृलाई खुवाउने), १० दिनमा चोख्याउने, १२ दिनमा घसु, १३ दिनमा श्राद्ध गरी प्रत्येक १/१ महिनामा श्राद्ध वा जलदान गर्ने गरिन्छ । पुनः ६ महिनामा दान दिई श्राद्ध गरेपछि १ वर्षमा वरखी फुकाएर माइती खलकबाट र छोरीहरूबाट सगुन लिई चोखो भई आफन्तहरूलाई भोज खुवाउने चलन रहेको छ । यसरी नै दुई वर्षमा पनि श्राद्ध गरी दान दिने गरिन्छ र हरेक वर्ष वर्षमा श्राद्ध गर्ने गरिन्छ । यसप्रकार मृत्यु संस्कार कार्यमा आफूले सकेसम्म दान, दक्षिणा बज्राचार्य गूभाजुलाई दिने गरिन्छ ।

### (क) रञ्जितकारहरूको गुठी

रञ्जितकार जातिका बारेमा जान्नका लागि तिनीहरूको सामाजिक र पारिवारिक अवस्थाका बारेमा थाहा पाउनु आवश्यक छ । रञ्जितकार जातिका सामाजिक क्रियाकलाप मध्ये मृत्यु संस्कारका लागि आफ्नो आफ्नो क्षेत्रअनुसार विभिन्न नाममा देवदेवीका नाममा समेत गुठीहरू राखेको पाइन्छ । यसमध्ये यिनीहरूको प्रमुख गुठीका रूपमा सि-गुठीलाई लिन सकिन्छ । सि-गुठी भन्नाले मुर्दा जलाउनका लागि गठन गरिएको सामाजिक गुठी हो । प्रायःजसो रञ्जितकारहरूको यसप्रकारको गुठी रहेको पाइन्छ । यस सि-गुठीको प्रमुख कार्य भनेको गुठीमा आवद्ध जोसुकै गुठियारले घरमा जोसुकै परिवारका सदस्यको मृत्यु भएमा मृत्यु हुनेको दाहसंस्कार सबै गुठीले गरिदिनु हो । यस कार्यका लागि गुठीमा हरेक वर्षका लागि गुठियारहरूमध्ये कसैले ५ जना र कसैले १० जनासम्म गों अर्थात् काम गर्ने भन्ने समूह नियुक्ति गरिएको हुन्छ । गुठियाराहरूको कोही परिवार सदस्यको मृत्यु भएमा यी गोंहरूले सम्पूर्ण काम गरिदिनुपर्छ । यी गोंहरूको अर्को मुख्य काम वर्षमा १ या २ पटक वार्षिक भोज गर्दा ज्या सनाम (कुक) का रूपमा काम गर्नुपर्छ । रञ्जितकारहरूको सिं गुठीमध्ये निम्न गुठीहरू ठूला गुठी र साना गुठी रहेका छन् ।

| क्र.सं. | गुठीको नाम | ठेगाना | गुठियार संख्या |
|---|---|---|---|
| १ | श्री इन्द्रायणी ज्वालामुखी तपामरी गुठी | का.म.न.पा.२१, मजिपाट | ३२५ |
| २ | श्री पचली भैरव गुठी | मिजपाट - १ | १५० |
| ३ | सनाः गुठी | | |

| ४ | तुककाकु गुठी | | |
|---|---|---|---|
| ५ | शिवरात्री गुठी | | |
| ६ | टपाःमरी गुठी | | |
| ७ | फागुपूर्णिमा गुठी | | |
| ८ | यःमरी पून्ही गुठी | | |
| ९ | सल्हु गुठी | | |

### ४.३.५ रञ्जितकार जातिको देगु पूजा (देवाली)

नेवार जातिमा वर्षको १ पटक तिथिअनुसार दाजुभाइहरूको संयुक्त भोज अर्थात् कुलदेवता देगु पूजा गर्ने चलन रहिआएको छ । यस्तै प्रचलन रञ्जितकार जातिको पनि आफ्नै परम्पराअनुसार गर्ने चलन छ । देगु पूजा तिथिअनुसार वैशाख शुल्कप्रतिपर्दा तृतियादेखि १ महिनासम्म आ-आफ्नो तिथिअनुसार मनाउने गरिन्छ । देवालीमा प्रायले बोका काट्ने गरिन्छ । गुरूजुबाट पूजापाठ गराई मनाइने देवालीमा घरका दाजुभाइ, दिदीबहिनी, दाजुभाइका छोराछोरी, भान्जाभान्जीहरूलाई बोलाएर भोज खाने खुवाउने गरिन्छ । देवता सामु दिइएको वली बोकाको टाउकोका विभिन्न भागलाई दाजुभाइ एक आपसमा मिलाएर सिकावु पनि गरिन्छ । सिकावु गर्दा सबैभन्दा जेठोलाई टाउको, माइलोलाई दायाँ हात, साइलोलाई देब्रे, क्रमिक रूपमा सिं दिने चलन छ । देगु पूजा (कुल देवताको पूजा) वैशाख शुल्कप्रतिपर्दादेखि अक्षय तृतिया जेष्ट शुक्लपक्ष चौथीसम्म मनाइन्छ ।

### ४.३.६ रञ्जितकारहरूले मनाउने सांस्कृतिक नाच, जात्रा तथा बाजा

नेवार जातिका विभिन्न जातिहरूले संचालन गरिआएको नेपालका विभिन्न भागमा थरिथरिका सांस्कृतिक नाच, जात्रा, पर्व एवं बाजागाजा जस्तै रञ्जितकार जातिले पनि सांस्कृतिक महत्व राख्ने इन्द्रजालाका बेला सात दिनसम्म काठमाडौंमा सांस्कृतिक लाखे नाच नचाउँछन् । हरेक वर्ष साप्ताहिक इन्द्रजात्राको बेला नचाउने यो लाखे नाच इन्द्रजात्रा भरी नचाइने नाचहरूमध्येको महत्वपूर्ण नाच हो । भाद्र चर्तुदशीका दिन, पूर्णिमाका दिन र इन्द्रजात्राको अन्तिम दिन काठमाडौंको वसन्तपुरबाट तानिने श्री कुमारी, श्री भैरव, श्री गणेशको रथलाई रथ तान्ने मार्गमा श्री कुमारीको रक्षार्थ रथको अघिअघि यो रञ्जितकार जातिले नचाउने लाखे नाच्दै सहर परिक्रमा गरिन्छ । यी लाखे श्रीकुमारी अर्थात् तलेजु भवानी यस सहरमा पाल्नु हुँदा तलेजु भवानीसँगै आएको र तलेजु भवानीले लाखेलाई हिंसा नगर्ने शर्तमा सहरमा प्रवेश गराएको साथै हिंसा नगर्ने शर्तमा उपत्यका शहरमा आएको हुनाले यी राक्षसले पनि सदा सर्वदा तलेजु भवानीको सेवाको लागि उपत्यकाका मानवहरूलाई दुःख नदिइकन सिमारेखाभित्र बसी भवानीको सेवा गरिरहेको हुँदा मल्ल राजा गुणकामदेवका पालादेखि श्री कुमारी, श्री भैरव र श्री गणेशको रथजात्रा गर्ने र रथ जात्रा

गर्ने बेलामा जीवित देवीका रूपमा स्थापित श्री कुमारीको अघिअघि तलेजु भवानीका अनन्य सेवक लाखेलाई लैजाने परम्पराअनुसार यी लाखे हप्ता दिनसम्म काठमाडौंको मजिपाट टोल लाखेंननी चोकबाट ऐतिहासिक लाखे नाच नचाउने परम्परा छ । यो लाखेलाई राष्ट्रिय सांस्कृतिक नाचका रूपमा लिइन्छ र यसैका आधारमा राष्ट्रिय सम्पदामा दर्ता गरी देश विदेशमा समेत यसको प्रचार प्रसार गर्ने हेतुले सरकारले यसको हुलाक टिकट पनि प्रकाशित गरिसकेको छ । यो नाचलाई रञ्जितकारहरूले जातिय सांस्कृतिक रूपमा पनि लिने गरेका छन् । यसै गरी काठमाडौं उपत्यकामा गरिने देवीको जात्राहरू जस्तै बालाचतुर्दशीको दिनमा असनमा जुधाइने १२ खत देवीहरूको खत मध्ये श्री श्री श्री इन्द्रायणी देवी ज्वालामुखी माईको खत जात्रा मजिपाट मञ्जुश्री रञ्जितकार जातिले गर्ने गरिन्छ । काठमाडौंस्थित मजिपाट, मञ्जुश्री टोलमा रहेको रञ्जितकार जातिमध्येको ज्वालामुखी माई तवामली गुठीका गुठियारहरूले संचालन गर्दै आएको यो खत जात्रा बालाचर्तुदशीको भोलिपल्ट जात्रा गरी सहरका विभिन्न स्थानमा पूजा थापी पुनः उक्त मञ्जुश्री टोलमा रहेका गुठी घरमा नै भित्र्याइन्छ । यो जात्राको बेला उक्त गुठीमा तीन दिनसम्म भोज खाने प्रचलन पनि रहिआएको छ ।

यसैगरी भक्तपुरको गोल्मदी टोल निवासी रञ्जितकारहरूले प्रत्येक वर्ष आफ्ना पुर्खाले राखेको धिमे बाजा हालसम्म विभिन्न पर्वहरूमा बजाउँदै आएका छन् । यी रञ्जितकारहरूले बजाउने धिमे वाजालाई अन्य नेवार समुदायले बजाउने धिमे वाजा जस्तै उत्कृष्ट मानिन्छ । यस्तै उक्त टोलका रञ्जितकारहरूले नौवाजा पनि बजाउने गर्दछन् । यो वाजा पनि ऐतिहासिक मानिन्छ । यो धिमेवाजा बजाउने भक्तपुरका रञ्जितकार समुदायका नै हुन् ।

## ४.४ चाडपर्व, जात्राहरू

नेवार सम्प्रदायभित्र पर्ने नेवार रञ्जितकार (छिपा) हरूको संस्कृति, धार्मिक, चाडपर्व र जात्राहरू अन्य नेवार जातिहरूको जस्तै करिब करिब त्यही अनुसार भएको पाइन्छ । यिनीहरूले मनाउने वर्षभरिको चाडपर्वहरू यस प्रकार छन् :

(१) चथा पर्व (श्रावण-भदौ) गणेश चौथी
(२) घण्टाकर्ण पर्व (श्रावण-भदौ) गथांमुग चःहे
(३) गाईजात्रा पर्व (भदौं) सा-पारू गुंयुन्हि
(४) इन्द्रजात्रा पर्व (असोज) येःयापून्ही
(५) वडादशैं (असोज-कार्तिक) मोहनी नखः
(६) तिहार, दीपावली (कार्तिक) सोनुति, स्वन्ति
(७) धान्य पूर्णिमा (मंसीर) योःमन्ह्री पूर्णी
(८) माघे संक्रान्ति (माघ) घ्यो चाकु सल्हु
(९) शिवरात्री (फागुन) सिःलाचन्हे

(१०) घोडेजात्रा (चैत्र) पाहा चन्द्रे
(११) बाको मुख हेर्ने
(१२) आमाको मुख हेर्ने

### ४.४.१ चथाः (गणेश चौथी)

भाद्र शुल्कपक्ष (यलाख चौथी) चर्तुदशीका दिन नेवार जातिमा नेपालीहरूको महान चाड दशैंको आगमनको संकेतको रूपमा यस गणेश चौथीलाई चथा पर्वका रूपमा मनाउने चलन रहिआएको छ । भाद्र चर्तुदशीका दिन मनाउने यस पर्वलाई नेवार जातिका मानिसहरूले सुव्यवस्थित, रमाइलो ढङ्गले मनाउन सकेन भने वर्षमा आउने दशैं चाड पनि खुशी, उमङ्गसँग मनाउन सकिँदैन अर्थात् पाउँदैन भन्ने भावना साथ सकभर यस चौथी ( चथा) लाई विशेष पर्वका रूपमा मनाउँदै आएका छन् ।

नेवार समुदायभित्र धार्मिक सांस्कृतिका कुनै पनि काम गर्दा सर्वप्रथम गणेशलाई पूजा गरेर मात्र अन्य देवीदेवताको आरधना गर्ने र कुनै कार्यहरू गर्दा गणेशको आरधना गरिसकेपछि मात्र अन्य कार्य गर्ने प्रथा रहिआएको देखिन्छ । गणेशलाई विघ्न बाधा निवारणकर्ताका रूपमा पुजिने गर्दछन् । नेवार समुदायले जस्तै रञ्जितकार (छिपा) हरूले पनि यस पर्वलाई आउने चाडपर्वहरूमा कुनै पनि विघ्नबाधा विना नै हर्षित र उमङ्ग साथ मनाउन सकियोस् भनेर यस चाड पर्वलाई विशेष रूपमा मनाइ आएका छन् ।

यो पर्व विशेष गणेशको पूजाआजा गरी मनाउने पर्व हो । यस पर्वका दिन साँझ पूजा गर्दा गणेशका साथै सम्पूर्ण आकश मण्डलका ताराहरूमा समाविष्ट भएका देवदेवीको आरधना गरी पूजा गरिन्छ। तैपनि यसको महत्व गणेश पूजाका रूपमा नै लिइन्छ।

यस पर्वका दिन पूजा सामग्रीको अलावा मुख्यतयाः उखुको बोट, अदुवाको बोट, चथा फूल (विशेष एक प्रकारको फूल उक्त दिन चढाउने गरेको) मकै, भटमास सम्भव भएसम्मको गेडागुडी र समयबजी राखी पूजा गरेको पाइन्छ । यस दिन घरमा गणेशको प्रसाद, टिका लगाई समयबजी गेडागुडी खाएर विशेष पर्वको रूपमा भोज खाने चलन पनि गर्दै आइरहेको पाइन्छ।

### ४.४.२ घण्टाकर्ण पर्व (गथे मंगल)

यो पर्व नेवार समुदायले मनाउने विभिन्न पर्व मध्येको एक श्रावण कृष्ण चर्तुदशीका दिन मनाइने यो पर्व खासगरी टोलटोलको दोबाटोमा नरकटको हाँवाहरूलाई रूखको रूपमा ठड्याएर भूतप्रेतको रूपमा दोबाटो, दोबाटोमा राख्ने र त्यसमा विभिन्न रूप धारण गरिएको बोक्सीको भनि स-साना पुतलीलाई झुण्ड्याएर राखिन्छ र त्यस रूखमा सजिसजाउ गरी अजङ्गको रूपमा राक्षसको रूपमा उभ्याइएको हुन्छ । साथै कुमार केटालाई नाङ्गै राखी विभिन्न रूपले चित्र शरीरमा लेखाएर घरपिच्छे आजु जय हा.... आजु जय हा... भन्न लगाएर बेइजतिको रूपमा भेगत वा माटोको भाडोमा पैसा, चन्दा उठाउन लगाइ सकेपछि

त्यसै माटोको भाँडोमा नै दही चिउरा मुछेर खुवाई टाउको चारपाटे मुडेर नरकटको रूखलाई ढालेर त्यस माथि विश्राम गराई टोलभन्दा बाहिर लगी नदीमा सेलाउने गरेको पाइन्छ ।

यो पर्व मनाउनुको मुख्य आशयबारे स्थानीय हरिमान रञ्जितकारको धारणा अनुसार हरेक वर्षको असार श्रावणमा मानिसहरू खेतीपातीमा व्यस्त रहने समय मानिन्छ । वर्षभरि खानलाई पुग्ने गरी कमाउनको लागि खेतीपातीमा जानु पर्दथ्यो । पहिले पहिलेका कृषकहरू घरमा आफ्नो सदस्यहरूको मृत्यु भएपछि पनि समयमा खेतीपाती गर्न सकिएन भन्ने अन्नबाली उब्जनी गर्न सकिँदैन भन्ने हिसावले मृत्यु भएको मानिसलाई सुकुलमा बेरेर घरमा नै राखेर भए पनि पहिला खेतीपातीको काम नै सकाउने गरिन्छ । यस चथा पर्वको अघि नै खेतीपातीको काम सम्पन्न गरिन्छ भन्ने बुझिन्छ । रातदिन नभनी मर्दा-पर्दा समेत परवाह नगरी खेतमा गई महिनौंसम्म काम गर्दा घरमा कुनै व्यवधान नहोस् भनी यस दिन धार्मिक कथनअनुसार भूतप्रेत पन्छाउने पर्वको रूपमा नेवार समुदायले जस्तै रञ्जितकार जातिले पनि यस पर्वलाई मनाइ आएको पाइन्छ ।

घण्टाकर्ण (गथे मंगल) पर्वमा घरघरमा त्यस दिनदेखि भूतप्रेत (नराम्रो) हरू घरमा हुलिन नपाओस् भन्नाको लागि मूल ढोकामा फलामको किल्ला (तीन खुट्टे) ठोक्नुको साथ फलामको औंठी लगाउने र बेलुका माटाको कटारीमा भूस, भूतप्रेतको फूल, जाँडको चौटा, खाने फूल सिङ्गै, रक्ती, राँगाको फोक्सो आदि राखेर घरको सदस्यहरूले आफूले लगाएको लुगाको धागो निकालेर त्यसमा राखी बत्ती बालेर अब उप्रान्त घरबाट भूतप्रेत जाओस् भनेर त्यसलाई विधिपूर्वक सम्येवजी, छोइला, भटमास, अदुवा राखी पूजा गरी आधा खाई आधा भूतको लागि पन्छाएर अन्तिममा बत्ती बालेर वर्षभरिको लागी भूत घरबाट निस्कुन भन्ने भावना राखेर उक्त कटारीलाई चौबाटोमा नबोलिकन बोकेर विशेष गरी पुरूष व्यक्तिले फ्याक्न वा राख्न जाने गरेको पाइन्छ । भूत पन्छाएर मूल ढोका बन्द गरेपछि फेरि त्यस रातभर ढोका खोल्न हुँदैन भन्ने धारणा राखेर यो पर्व नेवार समुदायका रञ्जितकार (छिपा) हरूले पनि मनाउँदै आएको पाइन्छ ।

### ४.४.३ गाईजात्रा (सा-पारू)

श्रावण शुक्ल पक्ष पूर्णिमा अर्थात् जनै पूर्णिमाको भोलिपल्ट मनाइने यो पर्व मृतक आफ्ना परिवारको सम्झनामा मनाइने गरिन्छ । मल्ल राजा जयप्रकाश मल्लले आफ्ना रानीको पुत्र वियोगले अलाप विलाप गरेको देखेर धेरै नै शोक गरेकाले रानीलाई सम्झाउन, शान्त पार्न, लोक कल्याणको साथै सर्वहित हुने गरी त्यस दिनमा आफ्नो परिवारमा ब्रतवन्ध नगरेका कुमार केटा वा गाईलाई राम्रो सिंगार गरी साधु वा कृष्णको भेषमा आफ्नो परिवारका मृतक सदस्यको नाममा शहर घुमाउने चलन रहिआएको देखिन्छ । त्यसरी शहर घुम्न आएका साघुभेषी बालकहरूलाई शहरका ठाउँ ठाउँमा मृतक भएका घरका

मानिसहरूले आफ्ना मृतकको सम्झना, वैकुण्ठवास होस् भन्ने चाहना लिएर ३६५ वटा रोटीका पोका वा कुनै खाद्यवस्तु दान गरेमा मृतक भोकै हुनु नपर्ने जनधारणा राखी दान गरिन्छ । पहिला पहिला त माल्पुवा, स्वारी, केराउ, काँक्रो र पैसा राख्ने गरिन्छ भने हाल आएर विस्कुट, कुकिज र फ्रुटी र बच्चालाई दूध खुवाउने पनि गरेको पाइन्छ । मृतकको चिरशान्ति र शोकाकुल परिवारको सान्त्वना स्वरूप यो पर्व मनाउँदै आइरहेको पाइन्छ ।

यो पर्व नेवार समुदायमा क्वाटी खाने पर्वको रूपमा प्रख्यात मानिन्छ । वर्षभरिको विकार क्वाटी खानाले फालिन्छ भन्ने विश्वासका साथै थरिथरिको गेडागुडी मिलाएरू क्वाटी खाने गरिन्छ । यस पर्वमा छोरीवेटीहरूलाई क्वाटी खानको लागि बोलाइने चलन अहिलेसम्म पनि देखिनमा आएको छ ।

### ४.४.४ इन्द्रजात्रा (येयाः पून्ही)

इन्द्रजात्रा (येयाः पून्ही) भाद्र शुक्ल पूर्णिमालाई इन्दजात्रा भनि नेवार समुदायका एक जाति रञ्जितकार (छिपा) हरूले पनि यस पर्वलाई मानिरहेको पाइन्छ । त्यस दिन (दलु) झ्यालमा झुण्ड्याएका पानसलाई इन्द्र भगवानको रूपमा मानेर पूजा गर्ने र समयबजी चढाएर सर्वसाधारणलाई खान दिने र आफू पनि खाने चलन गर्दै आइरहेको छ । त्यसको भोलिपल्ट मल्ल राजाको पालादेखि चल्दै आएको कुमारी जात्रामा गणेश र भैरव (भेलु) लाई पुरानो नगर क्षेत्र (क्वःने) मा रथ तानेर जात्रा (यात्रा) गर्न लगाइन्छ । इन्द्रजात्राको दिनमा शहरको विभिन्न स्थानमा देवदेवीहरू लाखे, सवभकु, १२ वर्षमा मनाइने खोकनाका देवीहरू पनि नचाउने चलन रहेको पाइन्छ ।

सोह्रश्राद्ध पनि चल्ने यस महिनाको प्रतिपदाका दिनदेखि नै भएकोले आफ्नो पितृहरूलाई सम्झेर भैरव देवतालाई आफ्नो घरको चौबाटोमा सजाएर राख्ने र भैरवलाई जाँड, समयबजी राखेर पूजा गर्ने चलन पनि रहँदै आएको छ । रञ्जितकार (छिपा) हरूले पनि परापूर्वकालदेखि यस भैरव पूजा (इन्द्रजात्रा) मनाउनको लागि जग्गा, जमिन राखेको पनि देखिन्छ । चार पाँच घर मिलेर भैरव पूजा गर्ने र वर्षको एकचोटी जग्गाको आयस्थाबाट पूजा गरी समयबजी खाने चलन पनि रहेको पाइन्छ ।

### ४.४.५ दशैं (मोहनी नख)

कौलाश्व पारू आश्विनको प्रतिपदाका दिन घरघरमा चोखो गरी घटस्थापना गर्ने गरिन्छ । त्यस दिनदेखि नवरात्री शुरू हुन्छ र नवदुर्गाको प्रार्थना गरिन्छ त्यसै दिनदेखि दशैं शुरू भएको मानिने गरिन्छ र पूर्णिमाका दिनसम्म चल्ने गर्दछ । प्रतिपदाका दिन घटस्थापनापछि दिनहुँ नित्य पूजाआजा गरिन्छ । सप्तमीको दिनमा दुर्गा भवानीलाई भूईं फर्सी, अदुवाको बोट, उखुको बोट, केराको पात भित्र्याउने र अष्टमिको दिनमा घटस्थापना गरेको स्थान (आगमय्) यी सबै चिजहरू चढाउने रातो कपडा, काँचो मासु माटोको

भाडोमा राख्ने, जाँडरक्सी, चारथरिको गेडागुडी राखेर भोज चढाउने र पूर्णिमाको दिनसम्म राख्ने चलन रहिआएको छ । अष्टमिको दिनमा नै (कुछिम्वय्) दुई मानाको भोज खाने चलन पनि छँदैछ । नवमीको दिनमा वलि दिने चलन पनि छ, त्यस दिन वलि नदिनेहरूले नरिवल, अण्डा, फर्सी पनि चढाउने गरिन्छ । त्यस दिन विश्वकर्माको पूजा गर्ने पनि गरिन्छ । कुचो, नाग्लो, कैंची आफूले चलाउँदै आएका सामानहरूलाई विश्वकर्माको प्रतिकको रूपमा पूजा गरिन्छ र दशैंका दिनमा मात्र निकाल्ने गरिन्छ । दशमीको दिनमा घरको मूल व्यक्तिले फर्सीको वलि दिने चलन छ जुन महिलाहरूले हेर्न हुँदैन भन्ने गरिन्छ । अष्टमीको दिन राखेका कलश निकाली अभिषेक गरी त्यहाँ राखिएका सामानहरू ठूलोदेखि एउटा/एउटा दिने चलन पनि छ । जेष्ठताको आधारमा टिका लगाउने र दक्षिणा दिने चलन पनि छ । त्यसपछि दशमीदेखि आफूभन्दा सानोलाई (नलाःस्वा) टिका जमरा लगाउन बोलाउने र आफू चाहिँ ठूलाबडा कहाँ गई टिका ग्रहण गर्ने चलन पनि रहिआएको छ ।

### ४.४.६ तिहार (स्वन्ति)

नेवार सम्प्रदायमा मान्ने पर्वहरूमध्ये दशैं सकिने बित्तिकै अर्को पर्व तिहार (स्वन्ति) हो । यो पर्वमा झिलिमिली बत्ती बाल्ने, विभिन्न थरिको फूलहरूको बास्ना, विभिन्न प्रकारको रोटीहरू, मसला आदिले मान्ने पर्व हो । यो पाँच दिनसम्म मान्ने गरिन्छ । पञ्चक लागेको दिनदेखि पहिला काग पूजा, दोस्रो कुकुर पूजा, तेस्रो गाई (लक्ष्मी) पूजा, चौथो दिन (म्ह पूजा) गोवर्द्धन पूजा र पाँचौ दिन अर्थात् अन्तिम दिन भाइ पूजा गरिने चलन रहिआएको पाइन्छ । नेवार समुदायमा लक्ष्मीको विसर्जन ३ (तीन) दिन (स्वनुःति) गर्ने प्रचलन पनि रही आएको देखिन्छ । त्यस दिन छोरीबेटीलाई टिका लगाई प्रसाद ग्रहण गराउने गरिन्छ ।

### ४.४.७ बाला चःहे (सत्वीज छर्ने)

नेवार सम्प्रदायका नेवारहरूले विशेष गरेर बाला चःहे (सत्वीज छर्ने) का दिन गुठीहरू मानेको पाइन्छ । त्यस दिन आफ्नो गुठियारहरू मिलेर आफ्नो इष्टदेवीको कामना गरी (इन्द्रायणी, अजिमा, कुमारी, तकती, दुर्गा) वर्षभरिको आम्दानी, खर्चको हिसाव किताव मिलाउने र भोज बनाई खाने चलन पनि गर्दै आएका छन् । आफ्नो घरमा कसैको स्वर्गवास भएको छ भने यस दिन नौ थरिका गेडागुडी र मूलको चक्का, अदुवा, अविर, पैसा राखेर पशुपतिको श्लेष्मान्तक वनमा छर्ने कार्य गरेको पाइन्छ ।

### ४.४.८ यःमऱ्ही पुन्ही (धान्य पूर्णी)

पौष शुल्क पूर्णिमाका दिन मान्ने यःमऱ्ही पुन्ही (उधौली पूजा) पनि नेवारहरूको पर्व मान्न सकिन्छ । यस दिन चामलको (ताइचिन चामल) पिठोमा मुछेर त्यसभित्र चाकु, तिल राखी यःमऱ्ही बनाइ इष्टदेवीलाई चढाई र आफ्नो खेतको धान भित्र्याएको छ भने

लक्ष्मीलाई १०८ वटा यःमऱ्ही बनाई चढाउने र ३ (तीन) दिनसम्म राखेर निकाल्ने र छोरी, भान्जा, भान्जीहरू बोलाई खुवाउने प्रचलन पनि पाइन्छ ।

पूर्णिमाका दिन यःमऱ्ही बनाई दान दिने चलन पनि हालसम्म रहिआएको पाइन्छ । त्यस दिन विभिन्न स्थानका बच्चाहरू घरघरमा गई त्यःछिंत्य वकः छित्य विउमा ल्यासे म विउ म वुरी (एक माना दिए पनि हुन्छ, आधा माना दिए पनि हुन्छ, दिने तरूनी नदिनेहरू सबै बुढी) भनी गीत गाई मागी खाने चलन पनि रहेको पाइन्छ ।

पहिलाको कथनअनुसार पूर्णिमाको दिन चाकु, तिल मात्र राखेर यःमन्हि बनाउनु पर्छ भनिन्छ त्यस दिन अरू फरमाइस गर्नु हुँदैन भन्ने चलन छ तर समयको परिवर्तनले गर्दा हाल यसलाई मासु, मास, तरकारी (भेज) खुवा आदि राखी फरमाइस गरी खाने बनाउने गरेको पाइन्छ ।

### ४.४.९ माघे संक्रान्ति (घ्यू:चाकु सल्हु)

माघ महिनाको पहिलो मकर संक्रान्ति (घ्यू: चाकु सल्हु) सबै हिन्दू, बौद्धधर्म मान्नेहरूले मान्दै आइरहेको पर्व हो जुन रञ्जितकारहरूले पनि यसलाई पर्वको रूपमा मान्दै आइरहेको पाइन्छ । यस दिन पितृहरूको नाममा सबभन्दा पहिला आफ्नो संस्कार गर्ने गुभाज्यु वा पुरोहितलाई दान दिने गरिएको पाइन्छ । त्यसपछि इष्टदेवी,सबै देवदेवीहरूलाई घ्यू, चाकु, चिउरा, तिलको लड्डु, काँचो तरूल (सन्या), सिद्रे माछा, हरियो लसुन, लाखामरी, काउलीहरू राखेर ठूलाबडाहरूबाट टाउकोमा तेल हाली आशिर्वाद दिई खानेकुरा हातमा राखिने चलन गर्दै आइरहेका छन् । मकलमा आगो राखी दिने र त्यस दिन सिद्रे माछाको टाउको पहिला टोक्ने चलन छ किनकि त्यसबाट आफ्नो शत्रुलाई हराउन सकिन्छ भन्ने विश्वासलाई रञ्जितकार (छिपा) हरूले पनि विश्वास गर्दै आइरहेको पाइन्छ ।

### ४.४.१० सिलाचःहे (शिवरात्री)

यस शिवरात्री (सिलाचःहे) फागुन महिनाको त्रयोदशीको दिन मान्दै आइरहेको पाइन्छ । यस दिन धेरैजसो नेवारहरूको गुठी पनि हुन्छ । यस दिनलाई शिवजीको जन्म दिनको रूपमा मनाइने गरेको पाइन्छ । विहानदेखि शिवजीको नाममा पैसा, चन्दा मागेर बेलुकीपख धुनी (आगो) वाल्ने र हलुवा, मकै, भटमास, लसुन साँधेर सबै छिमेकीहरू मिलेर शिवजीको प्रार्थना गरी रमाइलो गर्ने चलन पनि गर्दै आएको पाइन्छ ।

### ४.४.११ पाहाचःहे (घोडे जात्रा)

नेवारहरूले मान्दै आएका चाडपर्वहरूमध्ये यो घोडे जात्रा (पाहाचःहे) चाड पनि एक विशेष चाड हो । योपर्वमा साँझपख आ-आफ्ना टोलमा लुकिराखेको महादेव (लुकुमाद्य) लाई विभिन्न किसिमको गेडागुडीहरू बनाएर हरियो लसुन, रक्सी, जाँड, रोटीहरू राखेर भोज चढाउने गरिएका छन् । महादेवको पूजा गरी वली दिएर त्यसमाथिबाट गाजल लिएर

आँखामा लगाउने प्रचलन पनि रहिआएको हामी पाउँछौं । यसबाट आँखाको ज्योति बढ्ने, आँखाको रोगबाट बच्ने विश्वास लिएर गाजल लगाउने गरेको पाइन्छ । यो परम्परा अहिलेसम्म पनि गर्दै आएको पाइन्छ । पूजा गरिसकेपछि साँझ भोज खाने पनि गरिन्छ ।

यस घोडेजात्राका दिनमा सम्पूर्ण नेवारहरूले भोज खाने र आ-आफ्ना टोलका नित्यदेवी, पिठपूजा गरेर व्रतबन्ध र ईही (वेलविवाह) नगरेका कन्या केटा/केटीलाई सहभोज जस्तै पूजा गरी मलजा खुवाउने पनि गरेको पाइन्छ । यो मलजा गुठी हुनेहरूले खुवाउने गरिन्छ । यस्तै प्रकारले रञ्जितकार (छिपा) र महर्जन मिलेर बाह्रवर्षे इनारमा बच्चाहरूलाई खुवाउने पनि गर्दै आएको देखिन्छ । यस दिन इच्छा हुने बच्चाहरू आउन पाउने र यस मलजा खाएपछि रोग लाग्दैन भन्ने विश्वास रहेको पाइन्छ ।

### ४.४.१२ सिथिनखः

सिथिनखः अक्षय तृतियादेखि जेष्ठ शुल्कपक्ष चौथीसम्म मनाउने देवाली (देगु पूजा) पर्वको अन्तिम दिन देवाली नमनाउने दाजुभाईहरू मिलेर आफ्नो गक्षेअनुसार यस दिन देवालीको रूपमा यो पर्व मनाउने गरिन्छ । यस जातिका प्रायःजसोले अघि नै देवाली मनाउने चलन रहेको पाइन्छ । यस दिन घरमा चोखो गरी सबै परिवारहरू पनि चोखो भएर भोज बनाइन्छ । मुख्य यो पर्वमा केराउको वाडा, मासको वाडा, मुगीको वाडा, चामलको पिठोको रोटी (चःतामरी) र नयाँ मौसमका फलफूलहरू जस्तै काँक्रो, आलुबखडा, च्यूरी, आरू, विशेष पूजामा राख्नु पर्ने देखिन्छ । यस दिन देउपूजामा जस्तै राम्रो लुगाफाटा लगाई कुलदेवको पूजा गर्ने गरिन्छ ।

प्रायः रञ्जितकार (छिपा) हरूको देवता धोविचौर, फकनाजोलमा हुन्छ । मजिपाट, मञ्जुश्री टोलका रञ्जितकारहरूको कुलदेवता धोविचौरमा स्थापना गरिएका छन् । यस दिनमा नयाँ बुहारी, बच्चाहरूलाई पनि सामेल गराउने प्रचलन रहिआएको छ । नयाँ दुलहीलाई कुलदेवतामामा सामेल गराउन माटो भाडो (किस्ली) चामल, सानो सिङ्गो खालको सुपारी, पैसा राखी भगवान अगाडि राखिन्छ । नयाँ बच्चाको सामेलमा पनि यस्तै गरिन्छ । त्यस दिन भोज वाडाहरू बनाएर खाने गरेको पाइन्छ । त्यस दिन छोरीबेटीहरूलाई बोलाएर खुवाउने पनि चलन रहिआएको देखिन्छ । त्यस दिन बनाएको रोटी वाडालाई भोलिपल्ट कुमार पूजा गर्नलाई पनि राखिन्छ । यो कुमार जैसिदेवलको एउटा चोकमा छन् । सिथिनखःको भोलिपल्ट यस कुमारलाई बाहिर ल्याएर राख्ने चलन छ । सबैले अघिल्लो दिन बनाएको रोटीहरू राखेर पूजा गर्न आउँछन् । त्यसै दिन बेलुका दुध, मह, पञ्चामृतले स्नान गराई जात्रा गरी पुनः स्थानमा राख्ने चलन पनि गर्दै आइरहेको हामी पाउँछौं ।

## ४.५ मूख्य सामाजिक-सांस्कृतिक विशेषता

नेवार समूहका एक नेवार जाति रञ्जितकार (छिपा) हरूको सामाजिक संस्कृतिले पनि विशेष विशेषताहरू ओगटेको पाइन्छ । यिनीहरूलाई सुसंस्कृत, सुयोग्य र सभ्य सामाजिक संगठनमा राख्ने एक पुरानो आधार भनेको नेवारहरूको गुठि नै हो । जन्मदेखि मृत्युसम्म गर्नुपर्ने संस्कार र सामाजिक विधि व्यवहार यहि गुठीले नै गर्दै आइरहेको पाइन्छ ।

रञ्जितकारहरूको सामाजिक, सांस्कृतिक महत्वपूर्ण कार्य धेरैजसो गुठिद्वारा नै गर्ने गरेको पाइन्छ । प्रत्येक गुठिमा एकजना थकाली (जेठो) हुने गर्दछ । उक्त थकालीले आफ्नो जातभित्रको सामाजिक संस्कृतिमा के-कस्तो समस्या छ भनी त्यसको हल (समाधान) गर्ने तिर लाग्ने गर्दछ । वर्ष वर्षमा गुठी मनाउने गरिन्छ । गुठीमा आवद्ध गुठियारहरूको संख्या यकिन गरिएको हुँदैन । मजिपाट मञ्जुश्रीमा बस्ने रञ्जितकारहरू इन्द्रायणी तपामरी (ठुलो रोटी) गुठीमा आवद्ध रहेको पाइन्छ । गुठिअनुसार गुठीको नामकरण फरक फरक हुन्छन्- वालचःहे गुठी (वालाचतुर्दशी), थिंला गुठी (धान्य पूर्ण), योसिं थनेगु गुठी (लिङ्गो उठाउने), सिलाचन्हे (शिवरात्री) गुठी, मलजा गुठी (बालकहरूलाई पाकेको खाना खुवाउने), माल्पाश्वारी गुठी (मालपुवा र स्वारी खुवाउने गुठी) जस्ता अनेक थरी गुठी रहेको देखिन्छ । यी गुठीहरू हालसम्म मनाउने परम्परा रहेको पाइन्छ ।

नेवारहरूले संस्कृति संरक्षण र सम्वर्द्धनका लागि छुट्याई राखेको जग्गा सरकारले अधिग्रहण गर्नु र सांस्कृतिक धरोहरका रूपमा पूर्वजहरूले राखेको (गुठीको लागि) जग्गा, जमिन, गरगहना, पाटी पौवा, मठमन्दिर मध्ये आफूलाई शिक्षित वर्गका रूपमा चिनाउन चाहने केही रञ्जितकारहरूले यस प्रकारका गुठी संचालनार्थ राखेको जग्गा जमिन आफू खुसी बेचविखन गरी खाएको देखिन आएको चाहिँ विडम्वना नै मान्नु पर्दछ । अपवादका रूपमा जानकारी भएको बेचविखन गरी खाएको गुठीहरू- १. स्वयम्भू चैत्य पूर्वपट्टिको मुख्य सिंढीमा रहेको ठूलो भगवानको मूर्तीको पूजा गर्ने गुठी, २. स्वयम्भू चैत्य मुनि सत्तल संरक्षण गुठी, ३. ज्या-वहाल बस्ने भगवान दास, हरिबहादुरको परिवारको लक्ष्मी पूजा गुठी आदि रहेका छन् ।

रञ्जितकारहरूको सामाजिक संस्कृतिको विशेषताहरू यस प्रकार छन् :

- रञ्जितकार जातिको कर्मकाण्ड, पूजाआजा तान्त्रिक बज्रयान बौद्धधर्मअनुसार गुभाज्यू (बज्राचार्य), पुरोहितहरूले गर्दै आइरहेको पाइन्छ ।
- धेरैजसो यिनीहरू तान्त्रिक बज्रयान धर्म मान्नेहरू भए पनि यी समुदायले स्वयम्भूलाई जस्तै पशुपतिनाथलाई पनि त्यत्तिकै महत्व दिएको देखिन आएको छ । त्यसै गरी अरू हिन्दूधर्म, बौद्धधर्मलाई पनि त्यत्तिकै महत्व दिँदै आएको देखिन्छ त्यसैले यसमा राम्रो धार्मिक सहिष्णुता भएको पाइन्छ ।
- रञ्जितकार (छिपा) हरूको आ-आफ्नो आँगनको भगवान, कुलदेवताहरू स्थापना गरेको देखिन्छ तर यसको नामकरण, आकार चाहिँ गोप्य राखेको पाइन्छ ।

- श्राद्ध, कर्मकाण्डहरू गर्दा आफ्नै गुभाज्यूबाट गराउँछन् भने सत्यनारायणको पूजा गर्दा बाहुनबाट नै गराइएको पाइन्छ ।
- काठमाडौंको चिकंमुगल बस्ने स्व.श्री मोतिमान रञ्जितकारले ढलौटको सम्येक बुद्धको मूर्ति वि.सं. १९९६ साल चैत्र ४ गते सोमवारका दिन चाँदीको गर-गहना पनि चढाएको र साथै वि.सं. २००४ साल माघ महिनामा (पञ्चदान) वंशज ऐच्छिक सम्यक महादान जस्ता अति गाह्रो र मुख्य कामहरू पनि गर्दै आएको छ । सम्यक महादन गुठी १२ वर्षको एकचोटी गर्दै आइरहेको पाइन्छ ।
- यसै गरी चिकमुंगला बस्ने स्वर्गीय रामदास रञ्जितकारले चोभारस्थित श्री आनन्दी लोकेश्वर (रोगहरू निको पार्ने) मन्दिरमा पताः सुनलेपन गरेको पता र त्यस लोकेश्वरको सुन प्रतिभा स्थापना र विभिन्न गरगहना पनि भगवानलाई चढाएको त्यस पताको अभिलेखबाट प्रष्ट हुन्छ । त्यही पता गरगहनालाई उक्त परिवारहरूले १ वर्षको एकचोटी वैशाख महिनामा गर-गहनाको विचार, हेरचाह गर्न जाने भनी आफ्ना सन्तानले राखिएको गरगहना हेर्ने र पूजा गर्दै आइरहेको देखिन्छ ।
- चोभारमा आनन्दी लोकेश्वरलाई प्रत्येक चैत्र शुल्कपक्षका दिन त्यही मन्दिरको दबुलमा पितलको पातामा राखेर लोकेश्वरलाई अभिषेक गर्ने गरेको उक्त पाता पनि मजिपात बस्ने स्व.शिव रञ्जितकार र वहाँको जहान तिरिमयजु मानवेती शुभ सम्वत (ने.सं. १०२७) सालमा चढाएको हो भनी त्यही पातामा कुँदिएको अभिलेखबाट प्रष्ट हुन्छ ।
- त्यसै गरी मजिपाट वाकुननिभित्र दुईवटा चिवाःद्यो पनि रञ्जितकारले नै बनाएको हो र त्यही ठाउँको अर्को वहाल किलावहालमा पनि स्व.वद्रिबहादुरले चिवाःद्यो बनाउन लगाएको देखिन्छ ।
- स्वयम्भू मन्दिरको पूर्वपट्टि बज्रनिरको दायाँपट्टिको सत्तल पनि शंखनारायण रञ्जितले बनाएका हुन् भनिन्छ, जुन सत्तल अहिले १० वर्ष अगाडिसम्म भएको र हाल मासिन पुगेको थाहा हुन आउँछ ।
- स्वयम्भूको गजुरदेखि बज्रसम्म १७ धार्नीको पत्ता स्व. मानसिं रञ्जितकारले चढाएको देखिन्छ ।
- पाटनस्थित रातो मछेन्द्रनाथ (पदमपाणी लोकेश्वर) मन्दिरमा करिब ७ फिट बराबरको चाँदीको पत्ता शिरविन्दु का.म.न.पा.वडा नं. २१ जैसीदेवल किलावहाल निवासी स्वर्गीय तेजमान रञ्जितकारले चढाएको हो भनी निजका पनाती छाउनी बस्ने हरिमान रञ्जितकारले बताउनु भएको छ । निज हरिमान रञ्जितकारका परिवारले हरेक वर्ष उक्त गुठी संचालन गर्दै आउनुका साथै १०१ वर्ष पुरानो उक्त पत्तालाई पुनः मोलम्वा लगाएको देखिन्छ ।

- चोभार आनन्दी लोकेश्वर मन्दिरमा माथि चढ्न सजिलो होस् भन्नाको लागि ज्यावाहाल बस्ने स्व.कीर्तिदास रञ्जित (जहान) स्व. नानी छोरी रञ्जितको सक्रियतामा भक्तजनहरूबाट चन्दा लिएर फलामको पाइप राखेको हो भनी त्यहाँको शिलालेखबाट प्रष्ट हुन्छ ।
- त्यसैगरी काठमाडौंस्थित भिमसेन टोलका भिमसेनको टाउकोमा रहेको सबैभन्दा ठूलो किकिंपा पनि रञ्जितकारहरूले नै राखेको प्रमाण पाइन्छ । जनवहालको (सेतो मछिन्द्रनाथ) रथ यात्रा गर्ने बेलामा कपडाको पत्ता चढाउने गुठी राखेको देखिन्छ ।
- मजिपाटस्थित नासफलनिरको पद्म सुगन्ध विहारमा बुद्धको मूर्ति मञ्जुश्री निवासी स्व. नारायण गोविन्दले स्थापना गरेको पाइन्छ ।
- काठमाडौंको भीमसेनस्थान भीमसेनको मन्दिरको मुख्य द्वारमा ग्रील (खापा) लगाउने काम द्वारिकामान रञ्जितकारले गरेका हुन् ।
- स्वयम्भूको पूर्वपट्टिको भगवान पालीको माथिपट्टि ठूलो साइजको बुद्धको मूर्ति ३ मध्ये २ वटा चाहिँ मानसिं मैया रञ्जितकारले स्थापना गरेको देखिन्छ ।
- स्वयम्भूको बज्र राखेको दक्षिणपट्टि रञ्जितकारहरूको मण्डप पनि छ जहाँ वर्ष वर्षमा होम गर्ने चलन पनि यही जातिले गर्दै आइरहेको पाइन्छ ।
- इन्द्रजात्राको बेला लिङ्गो उठाउने काम गुठीले योसिं उठाएर पूजा गरी भोज खाने चलन रहिआएको छ तर यस गुठीको जग्गा आजकल सडक विभागले कब्जा गरिएको थाहा हुन आएको छ । त्यसै बेला भैरब भगवानलाई वलि दिएको राँगाको मासु पनि प्रसादको रूपमा पातमा पोका पारेर सबै गुठियारहरूलाई एक एक पोका दिने चलन पनि छ भनी नन्दगोपालले उल्लेख गरेको पाइन्छ । त्यसै गरी लिङ्गो गाढ्ने पनि यही जातका गर्ने गरेका छन् ।
- ॐ वहालमा बसोबास गर्ने स्व. श्रीशंख रञ्जितकारले व्रम्हःटोल भलननि चोकमा घोडेजात्राको दिनमा मलजा (बच्चाहरूलाई खुवाउने खाना) खुवाउँदै आएको पनि पाइन्छ । यो मरःजा खुवाएपछि बच्चाहरूलाई रोग लाग्दैन भन्ने चलन पनि छ । यसको लागि कुलेश्वर र सितापाइला ९ मुरी धान र ८ मुरी जौ आउने जग्गा पनि राखेको पाइन्छ । यस व्यवस्थालाई निरन्तरता दिनको लागी हाल आएर ॐवहाल निवासी गोविन्द रञ्जितले १ लाख रूपैयाँको अक्षय कोष राखेको पाइन्छ ।
- काठमाडौं किलावहाल निवासी रञ्जितकारहरूले वर्षको एकचोटी सप्तरङ्ग रङ्ग लगाएर माघ महिनाको पूर्णिमाको दिनमा पशुपतिनाथलाई महास्नान गरिसकेपछि फेता लगाइदिने चलन पनि रहिआएको छ ।

- स्वस्थानी ब्रत कथा समाप्तीको भोलिपल्ट महास्नान गरी पशुपतिनाथको शीरमा बुद्धको मूर्ति राखी पञ्चरंगी कपडा महादेवलाई फेटा बाँधिदिने चलन यद्यपि चलिआएको देखिन्छ । यो महादेवलाई चढाइने पञ्चरंगी कपडा वडा नं. २१ जैशिदेवल किलावहाल निवासी सुन्दरमान रञ्जितकारका परिवारले नै परम्परादेखि रंगाउँदै आएको देखिन्छ । यसरी कपडा रंगाए वापत ती रञ्जितकारहरूलाई महादेवको प्रसाद स्वरूप नेवारी शैलीमा भोज खुवाई पठाउने गरेको सुन्दरमानको भनाइ रहेको छ । सुन्दरमानका अनुसार उक्त कार्य जंगबहादुरको पालादेखि नै उक्त परिवारले गर्दै आएको बताउनु हुन्छ ।
- स्वयम्भू चैत्य नजिक रहेको हारती माता कहाँ शुद्ध राती (चाः) पूजा गर्ने गुठी मजिपाट निवासी स्व.अमृतबहादुर छिपा रञ्जितकार र केही रञ्जितकारहरूले चलाउँदै आइरहेको तर हाल केही समययता यो गुठी संचालनमा आएको देखिँदैन ।
- यस रञ्जितकार जातिले जन्मदेखि मृत्युसम्मको संस्कार (कय्ता पूजा) व्रतबन्ध, वेलविवाह, गुफा विवाह, मृत्युपश्चात गर्ने श्राद्ध, कर्मकाण्ड, तान्त्रिक पुरोहित गुभाजुहरूले नै गर्दै आइरहेको पाइन्छ ।
- यस जातमा आफ्नै जातसँग मात्र विवाह गर्ने प्रचलन देखिन्छ । अझ ७ पुस्तासम्मको नाता भए तापनि विवाह चल्दैन । ८ पुस्तासम्मको नातामा विवाह चलेको पाइन्छ । अहिले आएर अन्तरजातीय विवाह पनि गर्दै आइरहेको देखिन्छ ।
- काठमाडौं मञ्जुश्री मन्दिरको पश्चिमपट्टिको चोकमा २ वटा चैत्यको निर्माण भाजुमान रञ्जितकार र लालबहादुर रञ्जितकारले स्थापना गरेको देखिन्छ । यस जातिले विभिन्न स्थानमा चैत्यको निर्माण गराई राखेको पाइन्छ ।
- यी जातिले नेवार समुदायमा चल्दै आएका चाडपर्वहरू पनि मान्दै आएको देखिन्छ ।
- नेपाल भाषा नेवारीलाई यस जातिभित्र व्यापक बनाउन जातीय संस्था रञ्जितकार समाजले पहल गरेको देखिन्छ ।
- मातृभाषालाई लेख्ने, बोल्नको लागि यस समाजले विशेष ध्यान दिइरहेको देखिन्छ ।
- यस रञ्जितकार (छिपा) समाजमा छोरीबेटीहरूको ठूलो स्थान रहेको देखिन्छ । किनकि जन्मदेखि मृत्युसम्म र घर बनाउँदा समेत यिनीहरूको विशेष योगदान पाइन्छ । जस्तो कि बच्चाको जन्म, न्वारनमा पहिला फुपु, छोरीवेटीहरू संस्कार गर्न चाहिन्छ, मृत्यु भएमा पनि छोरीहरूले नै संस्कार गर्नुपर्ने देखिन्छ । र कुनै नयाँ चिज वस्तु बनाएको खण्डमा पहिला छोरीलाई नै प्राथमिकता दिइन्छ । घरहरू बनाउँदा छोरीहरूले आफ्नो नयाँ फरिया उडाएर पूजा गरिन्छ । र पहिलो भान्सा गर्दा यिनीहरूबाट नै चुल्हो बाल्ने जस्ता शुभ कार्य छोरीबाट नै गराएको देखिन्छ ।

- यस जातिको मुख्य भाषा नेपाल भाषा नेवारी नै हो यस अलावा नेपाली भाषालाई राष्ट्रिय भाषाको रूपमा प्रयोग गरी आएको देखिन्छ ।
- भक्तपुरमा वैशाख महिनामा हुने विस्केट जात्रामा रङ्ग चढाउने काम यी रञ्जितकारहरूले गर्दै आएका छन् ।
- लिङ्गो उठाउँदा उडाउने झण्डाहरूमा रङ्ग लगाउने काम पनि यी जातिले गर्दै आइरहेको पाइन्छ ।
- काठमाडौंको ह्यूमत टोलमा नारायण देवताको पूजा पनि यिनै रञ्जितकारहरूले गर्दै आएका छन् ।
- यसरी रञ्जितकार जातिको सामाजिक र संस्कृति विशेषताहरू रहेको पाइन्छ ।

## ४.६ नेवार सम्प्रदायका विविध समुह वा अन्य समुहको प्रभाव

नेवार समुहका एक जाति रञ्जितकारहरू नेवार सम्प्रदाय बीचमा विविधि समुह र अन्य समुहहरूसँग पनि धेरै प्रभाव पारेका देखिन्छ । नेवार समुहका एक जाति (ज्यापू) महर्जनहरूसँग सांस्कृतिक सम्बन्ध छ भन्ने कुरा मजिपाट (मजिपा) 'लाखे' र तखित अजिमा (निलवराही) को जात्राबाट नै एउटा ऐतिहासिक घटनाबाट थाहा हुन्छ ।

घोडे जात्राको भोलिपल्ट भलननी टोल (ब्रम्हटोल) भित्र यी जाति र ज्यापु (महर्जन) हरू मिलेर बच्चाहरूलाई रोगव्याधीबाट बचाओस् भन्नाको लागी (मलःजा नकेगु) र पुषमा विभिन्न गेडागुडीहरू राखेर बच्चाहरूलाई खुवाएमा यसबाट बचिन्छ भनेर दुबै जातका मानिसहरू मिलेर खुवाइरहेको पाइन्छ ।

यस्तै गरी इन्द्रजात्राको बेला लिङ्गो उठाउने बेलामा (नाय्) कसाई र (छिपा) रञ्जितकारहरूसँगै बसेर समयबजी खाँदै आएको पाइन्छ यसले गर्दा दुबै बीच राम्रो सम्बन्ध भएको देखिन्छ । यसै गरी लाखे नाच रञ्जितकारहरूले नै नाच्नु पर्ने भएकोले लाखेको मुकुट (पुँ) चित्रकारहरूले नै लेख्नु परेकोले उनीहरूमा पनि प्रभाव परेको देखिन्छ । साथै लक्ष्मी पूजा, नाग पूजा, विवाहको बेलामा ढोकाको दायाँ बायाँ राख्ने बुद्धको चित्र कोरेको र अष्टमङ्गलको चित्रहरू पनि पु (चित्रकार) हरूले बनाएको प्रयोगमा ल्याउनु पर्ने भएकोले यी विभिन्न सम्प्रदायका बीचमा पनि राम्रो सम्बन्ध भएको देखिन्छ ।

### ४.६.१ सांस्कृतिक नाच लाखे र रञ्जितकार जातिको सम्बन्ध

एक समय अर्थात् नेपाल मण्डल राज्यमा राजा गुण कामदेवले राज्य संचालन गरिरहेको वेला नेपाल मण्डलका सम्पूर्ण जनतहरू हांसी खुसी जीवन निर्वाह गदर्थे । त्यस वेला प्राणी हत्या हुदैन थियो । यती नै बेला नेपाल मण्डल राज्यमा खडेरीको महामारी पऱ्यो जनतामा पानीको अभाव पर्न थाले र भोकभोकै पर्ने अवस्थाको सिर्जना भयो । पानी नपर्नुको कारण पत्ता लगाउन खोजियो । पानीको स्रोत मुहानहरू पनि सबै सुकिसकेका थिए ।

मानिसहरू बाटो बाटो, चोक चोकमा बसी पानीको लागि हरहर महादेव भनी महादेवलाई पुकार गर्न थाले पानी नपर्नाले सम्पूर्ण धारा, इनार र कुवा सुकेपछि प्राणीहरूको अवस्था गम्भीर हुने भएकाले यस्तो अवस्थामा राजा गुणकामदेव कहाँ उनका सहयोगी आचार्यहरू भेला भई पानी नपर्नाको कारण पत्ता लगाउन थाले आचार्यहरू आफ्नो तन्त्रमन्त्र विद्या प्रयोग गर्न थाले राजाको आदेश बमोजिम आचार्यहरूले पानी नपर्नाको कारण पत्ता लगाए ।

आचार्यहरूका अनुसार देशमा पानी नपर्नुको मुख्य कारण प्राणीको वली नदिएको हो भन्ने पत्ता लगाएपछि पानीको वर्षा गराउनको लागि तलेजु भवानीलाई नेपाल मण्डलमा भित्र्याउनु पर्छ भन्ने निष्कर्ष निकाली राजा सक्षम सोही बमोजिमको सल्लाह दिए । राजा गुणकामदेवलाई यसरी आचार्यहरूले सल्लाह दिएपछि तलेजु भवानी भन्ने को हुन् ? उनी कहाँ बस्छिन्, देवीलाई देशमा कसरी बोलाउन सकिन्छ भन्ने जिज्ञासा राखे । आचार्यहरूले आफ्नो विद्याले अध्ययन गर्दा तलेजु भवानी देशको पूर्व उत्तर दिशामा प्राणीको हत्या गरी बस्ने राक्षसहरूको वस्ती छ, त्यसै वस्तीमा राक्षसहरूको राक्षसका रूपमा पूजित भई विराजमान देवीलाई हामी तन्त्रमन्त्रको माध्यमबाट त्यहाँ गई देवी भवानीलाई खुशी पारी यहाँ राजा समक्ष ल्याउने राजाको आदेशमा उक्त राक्षसहरूको वस्तीतिर गई आचार्यहरूले भवानी तलेजुलाई भेट्ने कोशिस गरे ।

देवी फर्कने बताएपछि राजाले देवीलाई नेपाल मण्डलमा नै विराजमान हुन् आग्रह गरी तलेजु मन्दिर बनाई देवीलाई विराजमान गराएको भन्ने जनविश्वास रहेको छ । राक्षसहरूको भयानक गुफाभित्रको दृश्यले आचार्यहरूमा त्रास उत्पन्न भयो । दिनभरिको अमानवीय शिकारको भोजन खाई मस्त निन्द्रामा व्यस्त रहेको अवस्थामा पारी आचार्यहरू देवीकोमा पुगि सबै वृत्तान्त बताए । आचार्यहरूको कुरा सुनी देवी आश्चर्य भई ध्यान दृष्टिबाट नेपाल मण्डलमा खडेरी पर्नाको कारण प्राणी वलि नभएकोले हो **तसर्थ यो खड्ग लिई जाउ यो खड्गको माध्यमबाट प्राणीको वलि दिनु त्यसपछि समस्याको अवश्य निराकरण हुन्छ** । देवीको प्राणी वलि दिने कुराले आचार्यहरू नतमस्तक भई देवी समक्ष देशमा आजसम्म प्राणी हत्या नभएकोले देवी स्वयम् विराजमान भई समस्या समाधान गरिदिनु पऱ्यो भन्ने आग्रहलाई स्वीकार गरी देशमा आई देवीको खड्गद्वारा राँगोको वलि दिने बित्तिकै वर्षा भएको किंवदन्ती रहेको छ । यसरी देवी नेपाल मण्डल प्रवेश गर्ने क्रममा देवीसँगै देवीका अन्य भक्तहरू संदेक राक्षसहरू मध्ये सर्वश्रेष्ठ मानिने राक्षस लाखे पनि देवीको सेवाको लागि पछि लागि आएका रहेछन् । यसरी लाखे देवीसँगै सहर आउने क्रममा आचार्यहरूले देवीलाई विन्ती गरी प्राणीको हत्या गर्ने लाखेलाई त्यहाँ लगे अनर्थ हुने बताएपछि देवीले उनलाई बीच बाटोबाटै फर्किन आदेश भयो । राक्षसलाई उक्त आदेशले आफू दु:खित भएको र देवीले आदेश दिए प्राणी हत्या नगर्ने शर्तमा उनै लाखे (राक्षस) नेपालमा मण्डलमा पसेको भन्ने गरिन्छ । यस प्रकार लाखे देवीसँगै शहर आएको भए तापनि उनलाई मुख्य शहरभित्र पस्न नदिई शहरको सुरक्षार्थ बाहिरै बस्ने बन्दोबस्त गरिएको

थियो । यसैबेला शहर बाहिर खेतीमा संलग्न ज्यापुहरूसँग घुलमिल भई तिनै ज्यापुका छोरीसँग प्रेम गर्न पुगे । देवीले नेपाल मण्डलमा पानीको वर्षा भएपछि आफू फर्किने र त्यो खड्ग राजालाई कुनै पनि बेला कुनै ठूलो समस्या भएमा यो खड्ग प्रयोग गर्नु भनी खड्ग सुम्पिए । देवी फर्कने बताएपछि राजाले देवीलाई नेपाल मण्डलमा नै विराजमान हुन् आग्रह गरी तलेजु मन्दिर बनाई देवीलाई विराजमान गराएको भन्ने जनविश्वास रहेको छ ।

देवी तलेजु भवानीले यही लाखेलाई प्राणी हत्या नगर्ने र मानव कल्याणको लागि उनीहरूको रक्षार्थ शहरमा नै राखेका थिए भन्ने ज्यापुनीसँगको प्रेमले गर्दा ज्यापुनी प्रेमीले पछि आफ्नी आमाको आदेशमा लाखेलाई नै हत्या गरी आफू लाखेको नाममा सधैं कुमारी नै बस्ने अठोट गरी तलेजु भवानी समक्ष समर्पण भईन र उनै कुमारी केटी जीवित देवीको रूपमा आजसम्म श्री कुमारीको रूपमा पूजित छिन् । यिनै जिवित कुमारीलाई प्रत्येक वर्ष इन्द्रजात्राको दिनमा उपत्यकामा घुमाई लाखे नाच देखाउने चलन हालसम्म चल्दै आइरहेको छ । यहाँ लाखे र रञ्जितकारहरूको सम्बन्ध कसरी भयो भन्ने छोटकरी जिज्ञासा उल्लेख गरिन्छ । मानव रक्षाको लागि बसेका राक्षसरूपी लाखेको हत्यापछि पुनः शहरमा विध्वंस हुने भयले प्रत्येक वर्ष इन्द्रजात्राको साताभरि लाखे नाच नचाइन्छ । यो लाखे नाच काठमाडौंका लाखे ज्यापु समुदायले सञ्चालन गर्ने गर्थ्यो भन्ने गरिन्छ । कालान्तरमा ज्यापु समुदाय खेतीपातीमा संलग्न हुनुपर्ने वर्ग भएकोले उनीले लाखे नाच चलाउँदा गाह्रो भएकोले मजिपाट लाखे ननीका छिपा रञ्जितकारहरूले सञ्चालन गर्ने, तकती अजिमाको खट जात्रासँग लाखे नाच साटिएको भन्ने बुढापाकाहरूको कथन रहेको छ ।

यस प्रकार ज्यापु समुदायसँग सांस्कृतिक संस्कृतिको रूपमा रहेको तकति अजिमाको खट जात्रा र लाखे नाच साटेपछि आजसम्म रञ्जितकारहरूले भाद्र कृष्ण द्वादसीका दिनदेखि एक सातासम्म लाखे नाच परम्परागत रूपमा सञ्चालन गरी आएका छन् । (विशेष नोटः माथि उल्लेख गरिए अनुसार लाखे कुमारीको सम्बन्धमा प्रस्तोता लेखक पूर्णरूपमा सहमत हुन नसकेको) । (कारणः राक्षस लाखे र ज्यापुनीको प्रेममा प्रेमिका ज्यापुनीले लाखेको हत्या गरेको इतिहासहरू उल्लेख गर्दछन् र किंवदन्ती उस्तै भेटिन्छ । तर लाखे समर्पणमा आजिवन कुमारी नै भई देवीको रूपमा पूजित भइरहने चाहिँ नेवार जातिको शाक्य थरकी हुने प्रचलन अद्यावधिक छ । यो वेमेलवंशको जस्तो लाग्छ) ।

### ४.६.२ ज्वालामुखिमाई तपामरी गुठी

श्री इन्द्रयाणीमाई (तकति अजिमा) विभिन्न देवीमध्ये एक देवी हुन् । यी देवीका थुप्रै बालबच्चाहरू भएकाले नेवार जातिले मनाउने मुख्य चाड मध्ये पाँहा-चहे अर्थात् घोडे जात्राको दिनभन्दा एक दिन अगाडिको पर्वका दिन पशुपति देवपत्तनका महादेवीले आफ्नी छोरीलाई नखत्या बोलाउने क्रममा सबै देवीहरूलाई पाँहा-चहेका दिन नै भोज बोलाएर तकति अजिमा माई इन्द्रायणी ज्वालामुखीमाईलाई मात्र घोडेजात्राको दिन (नखत्या) भोज

बोलाएका रहेछन् । आफ्नो माईतीमा नखत्या बोलाएको खुशीमा आफ्नो बाह्रवटी छोरीहरू समेत लिएर नखत्या जाँदा त एकदिन अगाडि नै सकिसकेको रहेछ र त्यो अवस्था देखेर मनमा खिन्नताा साथ मलाई आज भोज बोलाएर यहाँ त कोही छैन किन भनी सोध्दा भोज त हिजो नै भैसक्यो तिमी हिजो आएनौ भनी घरमा भएको लसुन साँधेर यो भए पनि खाएर जाउ भनी हेला गरेकाले श्री ज्वालामुखीमाईले पनि आफूलाई माइतीले बालबच्चा धेरै भएकाले हेला गरेको ठानी अब आजदेखि म कहिले पनि माइती आउँदिन र लसुन पनि खान्न, पछि मनाएर खानु भनी देवी लुतीमरू अजिमालाई एक वटा सुनको फर्सी दिई पठाएको भन्ने भनाई रहेको छ । उनै देवी तकती अजीमामाईलाई सम्मान गर्ने हेतुले बाला चर्तुदशीका दिन काठमाडौंको इन्द्रायणीमा तकती अजिमाका सबै छोरीहरूलाई माईको अगाडि राखी पूजाआजा गरी भोलिपल्ट सबै छोरीहरूलाई शहरका विभिन्न स्थानमा लगी बाजागाजाका साथ जात्रा गरिने चलन रहिआएको छ । यसरी पूजाआजा गरी जात्रा गरिने तकती अजिमामाईको एउटी छोरी जगदम्वा ज्वालामुखी मनकामनामाईलाई आफ्नो गुठीको देवीको रूपमा पूजा गर्ने रञ्जितकार मध्येको एउटा ठूलो समूहले श्री ज्वालामुखीमाई तपामरी गुठी मनाउँदै आइरहेका छन् । यस गुठीमा गुठियारको संख्या करिब चार सय जति थियो भन्ने गरिन्छ र पछि गुठियारहरूको संख्या ज्यादै भई गुठी संचालन गर्न गाह्रो भएकोले त्यस ज्वालामुखीमाई तपामरी गुठी २ भागमा विभाजित भएका थिए । विभाजित पश्चात संस्थापन पक्षले उक्त मुल देवीको जात्रा अद्यपी वाला चर्तुदशीको बेला गर्दै आइरहेको देखिन्छ ।

तपामरी गुठीको अर्थ ठूलो रोटी यसमा धान्य पूर्णिमाका दिन उक्त गुठीको १६ वर्ष उमेर पुगेका गुठीमा आवद्ध सबै पुरूष सदस्यहरूका लागि पालो पर्ने मध्येका पाला २ जनाले कमसेकम एक हात बराबर गोलाकार भएको चटामरी चामलको पिठोको र १ वित्ता मोटाई बराबरको मासको रोटी जसलाई वः भनिन्छ । ती रोटी र वः गुठियारहरूलाई बाँड्नु पर्ने चलन रहेको पाइन्छ । यो रोटी बाँड्ने चलन उक्त गुठीको मुल संस्थापनले गर्दै आए तापनि हाल आएर उक्त रोटी बाँड्ने संस्थापन पक्षबाट बन्द गरिएको छ भने संस्थापन पक्षबाट छुट्टिएका अर्को गुठीमा यद्यपि कायम रहेको देखिन्छ । यस गुठीको अलावा पनि रञ्जितकार जातिका पुर्खाहरूले स्थापना गरेका थुप्रै गुठीहरू छन् । यी मध्ये उल्लेख गर्न उपयुक्त गुठीको रूपमा पञ्चली भैवर गुठी, मत्स्येन्द्रनाथ, पताछायगु गुठी रहेको देखिन्छ । ती गुठीहरूका व्यावहारिक पक्षलाई यहाँ उल्लेख गरिएको छैन ।

## ४.७ सामाजिक-सांस्कृतिक परिवर्तनको स्थिति

नेवार जाति मध्येका एक जाति रञ्जितकार (छिपा) हरूको सामाजिक-सांस्कृतिक परिवर्तन भएको पनि देखिँदै आएको पाइन्छ । जसरी रञ्जितकार जातिहरूको परम्परागत पेशा भनेको नै जडिबुटीहरूलाई मिलाएर विभिन्न प्रकारको रङ्गहरू निकालेर सादा

कपडामा बुट्टा हाल्ने र काँचो धागोलाई रंगाउनु नै हो । तर हालसालमा आएर यी जातिका मानिसहरू आफ्नो पेशाबाट टाढा रहेको देखिन आएको पाइन्छ । यसको विभिन्न कारणहरू मध्येमा बजारमा प्रतिस्पर्धा गर्न नसक्नु, परम्परागत शैलीलाई आधुनिककरण गर्न नसक्नु देखिन्छ । विभिन्न रोजगारबाट प्रभावित भई आफ्नो कामलाई नराम्रो दृष्टिले हेर्ने प्रवृत्ति पनि हो । साथै अहिले आएर कपडामा रङ्ग हाली छाप्ने काम नै विराएको पाइन्छ । तर बनेपा, ख्वप र साँगामा कतैकतै देखिनमा आएको छ ।

यस रञ्जितकारहरूले गर्दै आइरहेको काम (पेशालाई) निरन्तरता र आधुनिककरण दिई रसायनिक रङ्ग प्रयोग गरी बजारको उचित व्यवस्था गरी यस काम गर्न चाहने कुनै रञ्जितकार जातिहरूलाई चाहिने जति आर्थिक र प्राविधिक सहयोग सँगसँगै नैतिक सहयोग पनि दिएको खण्डमा यो पेशाले संरक्षण र सम्वर्द्धन हुनसक्ने धेरै नै संभावना देखिन्छ । यो एउटा यसको लागि ठुलो नै चुनौती हो भन्न सकिन्छ । विभिन्न पेशामा लागेका रञ्जितकारहरूको जनशक्तिहरूलाई एक संगठित बनाई आफ्नो पेशामा लगाउन सके उनीहरूको सांस्कृतिक र आर्थिक उन्नति गर्न सक्ने देखिन्छ ।

यस्तै गरी यी जातिको पेशा, संस्कृति तथा भाषामा पनि कमी आएको देखिन आउँछ । यसको लागि प्रत्येक नेवार सम्प्रदायक नेवार जातिहरूले आ-आफ्नो छोराछोरीहरूलाई आफ्नै भाषा बोल्ने प्रवृत्ति बच्चादेखि नै सिकाउँदै आउनु पर्ने देखिन्छ । साथै नेवारी लिपी लेख्ने, नेपाल सम्वत लेख्ने, त्यस्तै गरी आफ्नो संस्कृति अनुसार संस्कारहरू गर्ने, जस्तैः गहना लगाउने, लुगाको पहिरण, खाने चिजहरूमा पनि आफ्नै मौलिक अनुसार गर्न गराउन लगाउनु पर्ने देखिन्छ । यस्तै गरी नेवारी एफ.एम.हरू सुन्ने बानी बसाल्न लगाउनु अति नै आवश्यक देखिन्छ ।

यसको लागि आफ्नो संस्कृति पुनर्जागरणको अभियानको व्यवस्था गर्नुपर्ने आवश्यकता देखिन्छ । यसको लागि रञ्जितकार समाजले बेग्लाबेग्लै समिति बनाएर नेवार जातिका संस्कृति, परिवर्तन र संस्कृतिको संरक्षण र सम्वर्द्धनका लागि विभिन्न अभियानहरू गर्दै आएको पनि देखिन्छ ।

यी रञ्जित वा रञ्जितकार (छिपा) हरूले जे सुकै लेखे तापनि यिनीहरू एउटै जातिका हुन् । नेवार समुदायबीच आफ्नै एक पहिचान भएको यी रञ्जितकार वसिधलय् (घ्याम्पो) मा रङ्ग लगाएर विभिन्न सदा कपडामा बुट्टा हाल्ने काम गरिरहेको मौलिक संस्कृत बिर्सेर गएको देखिनमा आउँछ यो एउटा दुःखको कुरा हो । अहिले आएर यी जातिका मानिसहरू नेपालको विभिन्न स्थानमा धेरैजसो विदेशिएका पनि छन् ।

यिनीहरूको मुख्य पेशा कपडा रंगाउने भए तापनि आजभोली विभिन्न पेशामा संलग्न भएको देखिनमा आएको छ । जस्तैः व्यापार, अध्यापन, कृषि, नोकरीतिरमा उन्मुख हुँदै गएको पाइन्छ । रञ्जितकार जाति नै नाच्नु पर्ने “लाखे नाच” आफ्नै मौलिक संस्कृतिको

लागि यसलाई बचाई राख्नु अति नै आवश्यक छ । रञ्जितकार (छिपा) हरूको सामाजिक, सांस्कृतिक परिवर्तन गर्नको लागि मुख्य आर्थिक अवस्था सुधार गर्दै लैजानु आवश्यक छ ।

आजकाल देशमा (समाज) देखिँदै आएको व्यक्तिवादी विचार, दलगतको प्रभाव, विभिन्न भावनाहरूलाई हटाएर रञ्जितकार वर्ग उसको पेशालाई प्राथमिकता दिने र भाषा, संस्कृति विकासको लागि सम्पूर्ण नेवार सम्प्रदायकाहरू एकजुट भएर लाग्नुपर्ने अत्यन्त आवश्यक भएको लाग्छ । यसो गरेमा आफ्नो संस्कृति परिवर्तनमा टेवा दिएको मानिनेछ ।

# पाँचौ अध्याय
# उपसंहार तथा सुझाव

वडा नं. २१ मजिपाट मञ्जुश्री काठमाडौं जिल्ला बस्ने रञ्जितकार (छिपा) जातिको विभिन्न संस्कार, कर्मकाण्ड, सामाजिक संस्कार बारे माथि उल्लेख गरियो। यिनीहरूले रङ्ग रंगाउने पेशाबाट नै आफ्नो परिचय दिँदै आइरहेको देखिन्छ। यी जाति अथवा (छिपा) २५२६ वर्षदेखि नेपालमा बसोबास गर्दै आइरहेको पाइन्छ । लिच्छविकालमा पनि कतैकतै रङ्ग बनाएर रङ्ग बनाएको कर लिने परम्परा पनि देखिने गरेको पाइन्छ (भिक्षु बुद्धदास १९९६) । त्यसैगरी लिच्छवीकालको ढुङ्गाको छाना राखेको बाट पनि यिनीहरू कान्तिपुरका पुराना बासिन्दा हुन् भन्न सकिन्छ। बज्राचार्य १४१ भाषा वंशावलीमा निलो रङ्ग र पाँच थरिका रङ्गका कपडालाई रंगाउने र खेतको काम गर्ने भनि उक्त वंशावलीमा लेखिएको पाइन्छ। गहुँगोरो वर्ण, मझौला कद, जिउडाल भएका मानिसहरू मध्ये धेरैजसो परेको देखिनमा आएको छ। पहिला पहिला सहरमा विकास गरेको बेला ५ लाख मानिसहरूको लागि २५०० मन्दिर अर्थात् २०० मानिसको एक मन्दिर पाउने देखिने यस कान्तिपुर नै नेवारहरूको पुर्खाले बनाइरहेको भनि देखिन्छ। एशियाको प्राचीन संस्कृति र सभ्यतामा नेवारहरू अरूको दाँजोमा पहिला नै देखिन्छन् । एक विदेशी लेखक टोनी हेगनका कथन अनुसार पश्चिम देशको ठूलठूला सहर जस्तै रोम वा एथेन्ससमा पनि हाम्रो देशमा जस्तो कलाकौसलले भरिपूर्ण भएको देखिँदैन।

नेवार जातिमा आफ्नो विशिष्ट कला, कौशलमा विशेष दखल रञ्जितकारहरूको छुट्टै पहिचान र सीपका कारण यिनीहरू व्यावसायिक रूपमा दक्ष मानिन्छ। लिच्छवीकालदेखि नै यिनीहरूले कपडा वा धागोमा रंगाउने कामलाई आफ्नो पेशाका रूपमा अंगाल्दै आएको देखिन्छ।

आफ्नो परम्परागत पेशालाई निरन्तरता दिई यसलाई व्यावसायिक रूपमा अगाडि बढाउन सकेको खण्डमा जातीय पहिचानको महत्व बढ्ने र रोजगारी प्रवर्द्धनमा महत्वपूर्ण टेवा पुगी राष्ट्रिय पूँजी समेत विदेश पलायन हुनबाट संरक्षण हुने देखिन्छ। तसर्थ लोपोन्मुख अवस्थामा रहेको यस जातिको पेशा संरक्षणको लागि नेपाल सरकारले प्राविधिक सहयोग उपलब्ध गराउनु पर्ने देखिन्छ। साथै यसका लागि यिनीहरूको जातीय संस्था रञ्जितकार समाजले विशेष पहलको जिम्मा लिनुपर्ने देखिन्छ।

# सन्दर्भसामग्री


## नेपाली

- खत्री, प्रेमकुमार, २०३६, नेपाली समाज र संस्कृति, काठमाडौंः पा.वि.के.त्रि.वि.वि. ।
- डंगोल, कृष्णहरि, २०६२, नेपाल मण्डलका मुकुण्डो नाच, नेपाल मण्डलया ख्वाःपाःप्याख; भक्तपुर : मध्यपुर कला परिषद ।
- नेवा जातिय प्रोफाइल, २०६३, काठमाडौं : नेवा दे दबु ।
- पाण्डेय, मधुसधन, २०६०, नेपालका जनजातिहरू, काठमाडौं : पैरवी प्रकाशन ।
- भट्टराई, बद्रिविशाल, २०६१, प्रयोगात्मक नेपाली शब्दकोष, काठमाडौं : विद्यार्थी प्रकाशन प्रा.लि. ।
- भट्टचन, कृष्णबहादुर, २००५, आदिवासी जनजातिका सवालहरूमा कानुनी सचेतना नेतृत्व विकास र जनवकालत, ललितपुर : नेपाल आदिवासी जनजाति महासंघ ।
- भिक्षु बुद्धदास, १९९६, बालपयोगी सचित्र बुद्ध जीवनी, थाइल्याण्ड : बड वा निसग्रप ।
- रञ्जितकार, भाइराजा, २०६३, रञ्जितकार समाजद्वारा प्रकाशित प्रथम साधारण सभा, बुलेटिन ।
- रञ्जितकार समाजको पहिलो विधान, २०६२, रञ्जितकार समाज ।
- लेभी, सिल्भा, २००५, नेपाल हिन्दू अधिराज्यको इतिहास (पहिलोखण्ड) ललितपुरः हिमाल किताब ।
- विष्ट, डोरबहादुर, २००२, सबै जातको फूलवारी, ललितपुर : हिमाल किताब ।
- शर्मा जनकलाल, २०३९, हाम्रो समाज एक अध्ययन, ललितपुर : साझा प्रकाशन ।
- श्रेष्ठ पद्म, २०६२, नेवार, स्यस्य समाज, काठमाडौं ।

## अंग्रेजी

- Bista, Dor Bahadur, 1997: ***People of Nepal:*** Kathmandu: Ministry of Information and Broadcasting.
- Nepali, Gopal Singh, 1965, ***The Newars, Bombay:*** United Asia Publication.
- Regmi, Dilli Raman, 1965, ***Medieval Nepal*** (Part 1), Calcutta: Firma K.L. Mahopadhyay 6/1a, Banchharam Akurlane 12, India.

## परिशिष्ट - १

## प्रश्नावली

**शिर्षक : मजिपाट मञ्जुश्रीका रञ्जितकार (छिपा) जातिको सामाजिक, सांस्कृतिक अध्ययन**

१ नाम : ........................................ २. ठेगाना : .....................................

३. पेशा :................................ ४. उमेर :...... ५. लिङ् :.................

६. तपाईको परिवार कस्तो छ ?

(१) संयुक्त (२) एकल

७. तपाईको परिवारमा कस्ले धेरै समय काम गर्दछन् जस्तो लाग्छ ?

(१) महिला (२) पुरूष

८. तपाईंको विचारमा कसलाई धेरै पढाउनु उचित लाग्छ ?

(१) छोरा (२) छोरी (३) दुबै

९. तपाईंको परिवारको आर्थिक स्रोत के हो ?

(१) कृषि (२) व्यापार (३) नोकरी (४) ज्याला मजदुरी (५) अन्य

१०. तपाईको परिवारको कुनै महिला राजनीतिमा लागेका छन् वा छैनन् ?

(१) छन् (२) छैनन

११. तपाईको परिवारमा छोरीलाई कुन उमेरमा विवाह गर्न उपयुक्त ठान्नु हुन्छ ?

(१) पर सर्न शुरू हुनु अगाडि (२) पर सरेपछि

(३) आफ्नो इच्छा अनुसार (४) पढाइ सकेपछि

(५) पढाई गर्दै (६) नोकरी गरेपछि

१२. तपाई कुन धर्म मान्नु हुन्छ ?

(१) हिन्दू (२) बौद्ध (३) हिन्दू र बौद्ध दुबै (४) क्रिश्चियन (५) अन्य

१३. तपाईको परिवारमा कुनै पनि कुरामा अन्तिम निर्णय गर्नुपर्दा निर्णायक भूमिका कसको हुन्छ ?

(१) पुरूष (२) महिला (३) दुबै

१४. कुनै पनि व्यक्तिको निधन भएमा सद्‌गद् कसले गर्ने चलन छ ?

(१) परिवारको सदस्य (२) नातागोता (३) गुठी

१५. तपाईको गा.वि.स./न.पा.मा रहेको देवी देवताको जात्रा कसले संचालन गर्दछ ,

(१) परिवार वा व्यक्तिले (२) गुठी

१६. तपाईले गर्दै आउनु भएको संस्कारमा परिवर्तन गर्नुपर्छ वा पर्दैन ?

(१) गर्नुपर्छ (२) अलिअलि गर्नुपर्छ (३) चाहिएको खण्डमा गर्नुपर्छ

१७. तपाईंले लगाउने कपडा अर्थात् लवाई खुवाईमा परिवर्तन गर्नुपर्छ जस्तो लाग्छ ?

(१) गर्नु पर्दैन (२) समय अनुसार गर्नुपर्छ (३) थाहा छैन